जन आस्था
साप्ताहिक
JANA AASTHA National Weekly
www.janaaastha.com
वर्ष ३०, अंक ४८, २०८१ साल फागुन १४ गते बुधबार, नेपाल संबत् ११४५, February 26, 2025 मूल्य : रु.१०

# शुक्रबारको प्रेमिल भेट, भोलिपल्टै जिन्दगी नामेट

शुक्रबार प्रेमीसङ्गै बसेर भोलिपल्ट वार्षिकोत्सवको रमझममा सामेल भई राति नै जीवनदेखि हार मान्नुपर्ने ? के बाध्यता आइपऱ्यो होला उनलाई !

तालिमरत रहेकै बेला ब्यारेकभित्र शौचालयमा गत शनिबार सशस्त्र इन्स्पेक्टर सन्तोषी महत मृत भेटिएको घटनाले नयाँ मोड लिँदैछ । यस प्रकरणमा मनकामना गण, भानु (तनहुँ) दरवन्दीका पोखरामा कार्यरत सुदूर पश्चिमेली इन्स्पेक्टर बिबेक जोशी समातिएका छन् भने राष्ट्रिय सशस्त्र प्रहरी प्रशिक्षण प्रतिष्ठान, मातातीर्थका डिआइजी लक्ष्मण सिंहको नेतृत्वमा पाँच सदस्यीय छानबिन समिति बनाइएको छ । सिंह कैलालीमा टिकापुर नरसंहार काण्ड हुँदा एसपी थिए ।

उक्त समितिमा हेडक्वार्टरको कानुन शाखाका एसपी छवि पाण्डेय र पोखराको विभिन्न युनिटका तीन जना सदस्य छन् । लामपाटनस्थित हुल तथा दंगा व्यवस्थापन


तालिम शिक्षालयमा जारी तालिमका कमाण्डर एसएसपी सुधिरजंग थापा र प्रमुख प्रशिक्षक एसएसपी तेज पोखरेल हुन् । घटना भएको दिन प्रमुख प्रशिक्षक पोखरामा नरहेको

बुझिएको छ । दुई महिनाअघि आइजिपी राजु अर्यालले प्रथम प्रवचन दिएको सिसं.१७ का इन्सपेक्टरहरूको तालिमका मुख्य प्रशिक्षक पोखरेल गत शनिबार काठमाडौंमा रहेको स्रोतको दाबी छ । प्रमुख प्रशिक्षकबिना तालिम भइरहनुलाई सुरक्षा फौजमा लापरबाहीको हद मान्ने गरिन्छ । तालिमेहरूको व्यावहारिक समस्या सहजीकरण र नियमानुसारका अभाव तत्काल पुरा गरिदिनु उनीहरूको अनिवार्य दायित्वभित्र पर्छ । उक्त शिक्षालयमा यसअघि सिसं.१६ को तालिम भएको थियो जसमा हाल कास्की प्रहरी हिरासतमा रहेका विवेक जोशी पनि सामेल थिए । शुक्रवार सङ्गै बस्ने क्रममा बिहेको कुरालाई लिएर यी दुईवीच झगडा भई सोको तनावमा सन्तोषीले त्यस्तो अप्रिय निर्णय लिएको हुनुपर्ने परिवारको ठम्याइ छ । मृतकका बाबुआमा अष्ट्रेलियाबाट आउँदै गरेको बुझिएको छ । शनिवार राति पासो लगाउनु अघिल्लो रात दुई इन्सपेक्टर बाँकी ८ पेजमा

# एमालेको राजमा एमालेद्वारा एमाले लखेटिँदै

**नेकपा (एमाले) भित्र 'बा' संस्कृतिको कोपभाजनमा परेर दर्जनौं पुराना नेता पाखा लागे । नरेश खरेल, सुरेश कार्की र धर्म निरौलाजस्ता कम्युनिष्ट आन्दोलनमै लागेर कपाल फुलाएका र गाला चाउरिएकाहरूले अध्यक्ष केपी शर्मा ओलीको 'नजर' मा नपरेकै कारण पार्टीबाट जबर्जस्ती निकालिनुपऱ्यो । सौराहा महाधिवेशनबाट शुरु भएको यो रोग तल्ला कमिटी, जनवर्गीय संगठन हुँदै पछिल्लो समय सरकारी नियुक्ति र कर्मचारी संयन्त्रमा पनि सल्किएको छ । पुराना नेतालाई दूधमा परेको माखो मिल्काएझैँ साइड लगाएकै शैलीमा आफ्नै सरकारको पालामा एमालेनिकट कर्मचारीहरू ४-५ महिनामै ठाउँ-ठाउँबाट खेदिएका छन् ।**

जसरी दुर्गा प्रसाईं र कोमल वलीहरूले एकैचोटि केन्द्रीय कमिटीमा ठाउँ पाए, त्यसैगरी कर्मचारीमा पनि बिचौलियाका मान्छेलाई धमाधम टिपिँदै छ । केपी ओलीले सत्ता सम्हालेको साढे सात महिने अवधिमा धितोपत्र बोर्डको अध्यक्षदेखि अर्थ सचिव हुँदै बीमा प्राधिकरणको अध्यक्षसम्म बिचौलिया दिपक भट्टका मान्छेलाई 'सेट गर्न' एमाले निकटलाई 'शहीद' बनाइएको छ ।

दुई साताअघि एकाएक सरुवामा परेका अर्थसचिव डाक्टर रामप्रसाद घिमिरे विद्यार्थीकालदेखिकै प्रतिवद्ध एमाले मानिन्छन् । त्यही भएर अर्थमन्त्री विष्णुप्रसाद पौडेलले रोजेरै उनलाई अर्थ सचिवको जिम्मेवारी दिएका थिए । तर, ६ महिना नपुग्दै उनलाई त्यहाँबाट धपाएर राष्ट्रपति कार्यालय पुऱ्याइएको छ भने सुर्खेत स्थायी ठेगाना भएका घनश्याम उपाध्यायलाई अर्थ सचिव बनाइएको छ । विदेशबाट पिएचडी गरेका अर्थतन्त्रका ज्ञातालाई राष्ट्रपति कार्यालयमा थन्क्याएर बाहिरका व्यक्तिलाई ढुकुटीको साँचो जिम्मा लगाइनुमा बिचौलियाकै दबाब र प्रभावले काम गरेको बताइन्छ । उच्च जानकार स्रोतका अनुसार सरकारसँग मिलेर करमा चलखेल गर्ने भट्टहरूको योजनामा बाधक

बनेकै कारण रामप्रसाद लखेटाईमा परेका हुन् ।

यसअघि नेपाल धितोपत्र बोर्ड (सेबोन) को कार्यकारी अध्यक्ष नियुक्तिमा पनि बिचौलियाहरू यसैगरी हावी भएका थिए । प्रधानमन्त्री ओली र अर्थमन्त्री पौडेलको रोजाइमा बोर्डको अध्यक्ष बनेका सन्तोषनारायण श्रेष्ठ बिचौलिया भट्टका खास मान्छे हुन् । प्रचण्ड नेतृत्वको सरकारकै पालामा उनलाई अध्यक्ष बनाउन भट्टले ओलीमार्फत तत्कालीन अर्थमन्त्री वर्षमान पुनमाथि चर्को दबाब दिएका थिए । वास्तवमा बिचौलिया भट्टले 'ओली बा' मार्फत श्रेष्ठलाई धितोपत्रको अध्यक्ष बनाउन जोडबल गर्नुको भित्री कारण स्टक एक्सचेन्जको लाइसेन्स हत्याउने रणनीतिअन्तर्गत थियो । सोहीअनुसार निजी क्षेत्रको नयाँ स्टक एक्स्चेन्जका लागि लाइसेन्स दिन विज्ञापन खुलाइएको छ । जबकि हाम्रोजस्तो सानो अर्थतन्त्र भएको मुलुकका लागि यौटाभन्दा बढी स्टक एक्सचेञ्ज आवश्यक नै नपर्ने विज्ञहरूको राय रहँदै आएको छ । अर्कोतिर, सरकारी स्वामित्वको नेप्सेले झण्डै सतप्रतिशत लाभांश दिइरहेको छ । गत वर्ष सरकारले ७५ प्रतिशत लाभांश पाएको थियो । समाजवादको गीत गाउने प्रधानमन्त्री र अर्थमन्त्रीकै पालामा यस्तो संस्थालाई सिध्याएर प्राइभेट कम्पनीलाई स्टक एक्स्चेन्ज सुम्पन खोज्नुको कारण के होला ? सडकमा हिँड्ने आममान्छेले समेत यसभित्रको चलखेल प्रष्ट बुझिसकेको छ ।

यता, अर्थमन्त्री मातहतको बीमा प्राधिकरणमा पनि एमालेको ट्याग लागेकाहरू त्यसैगरी जिल्याइएका छन् । फागुन १२ गते सोमबार राति बसेको क्याबिनेट बैठकले प्राधिकरणको अध्यक्षमा शरद ओझालाई नियुक्त गरेको थियो । नेपाल सरकारका पूर्वसचिव रामशरण पुडासैनी र स्वास्थ्य बीमा बोर्डका पूर्वअध्यक्ष दामोदर बाँकी ८ पेजमा

## पूर्वराजा कराउन थाल्नुमा के छ रहश्य

*पूर्वराजा ज्ञानेन्द्र शाहले शक्तिमा फर्किने अभिलाषासहित समर्थकहरूलाई गोलबन्द हुन अपील गरेपछि राष्ट्रिय राजनीति तरंगित छ । प्रजातन्त्र दिवसको अवसरमा फागुन ७ गते शुभकामना सन्देश जारी गर्दै उनले गद्दीमा फर्किने प्रष्ट मनसुवा प्रकट गरेपछि पक्ष-विपक्षमा बहस भैरहेका छन् । पूर्वराजाको वक्तव्यले राजावादी कित्तामा उत्साह छाउँदा मूलधारका राजनीतिक दल कांग्रेस, एमाले, माओवादी केन्द्र हुँदै बाबुराम भट्टराईसम्मले आपत्ति जनाएको अवस्था छ ।*

*हुन त, ज्ञानेन्द्रले गणतन्त्रको विरोधमा बोलेको यो नै पहिलो पटक होइन । नागरिक अभिनन्दन, भेटघाट, धार्मिक भ्रमणलगायत विभिन्न बहानामा देश तथा विदेशको यात्रा गरिरहेका उनले गद्दीमा फर्किने चाहना सांकेतिकरुपमा प्रकट गर्दै आएका छन् । तर, यसपाली भने आम नागरिकले समेत बुझ्नेगरी मूर्त शब्दमै नारायणहिटी फर्किने रहर गरेपछि राष्ट्रिय राजनीति गर्माएको हो । गद्दी त्यागेको दुई दशकसम्म शालिनतापूर्वक गतिविधि चलाइरहेका ज्ञानेन्द्रमा एकाएक शक्तिको भोक कसरी पलायो ? उनको उफ्राईको स्रोत के हो ? यी प्रश्नसँगै नयाँ राजनीतिक ध्रुवीकरणबारे अनेकन अनुमान भैरहेका छन् ।*

*पूर्व राजाको पछिल्लो छटपटीलाई मुख्यत: आन्तरिक र बाह्य दुबै पक्षसँग जोडेर विश्लेषण गरिएको छ । सरकार, राजनीतिक दल र नेताप्रति आम नागरिकमा बढ्दो* *बाँकी ७ पेजमा*

# सिक्किमबाट पाथीभरामा घुसपैठको सुराक

ताप्लेजुङको पाथीभरामा निर्माणाधीन केबलकार विरोधीहरूले थालेको आन्दोलनले विभिन्न रुप धारण गरेको छ । गत शनिबार पाथीभरा जाने डाँडोको फेदीस्थित काफ्लेपाटी र सदरमुकाम फुङलिङमा भएको आन्दोलनमा घुसपैठ भएको सेनाको निचोड छ ।

'केबलकार विरोधीहरूको आन्दोलनमा सिक्किमबाट घुसपैठ' भन्ने सैनिक रिपोर्ट प्राप्त भएपछि आइतबार गृह मन्त्रालयमा केन्द्रीय सुरक्षा समितिको आकस्मिक बैठक डाकिएको थियो । तर, चार वटै सुरक्षा निकायको रिपोर्टमा फरक कुरा भेटियो । भद्रकालीस्थित जंगी अड्डामा पृतनापति सम्मेलन जारी रहेकै बेला आएको उक्त रिपोर्टले सनसनी मच्चाउनु स्वाभाविक पनि थियो । बैठकमा सहभागी स्रोत भन्छ, 'केही दिनअघि केबलकार पक्षधर एक जनालाई धरानमा विरोधीहरूले मोसो दलेपछि राताराता भागेर सिक्किम पुगेका एकजना फरार अभियुक्तले सामाजिक सञ्जालमा लेखेको स्टाटसको आधारमा सेनाले उक्त रिपोर्ट गरेको देखिन आयो ।' धरानमा फागुन ४ गते केबलकार पक्षधर स्थानीय लिम्बू समुदायका पदम चेन्जी माबोलाई असन्तुष्ट समूहले हातपात गर्दै मोसो दलेको थियो । धरान-२ स्थित एचके मेलोडी होटलमा अर्कै सन्दर्भमा आयोजित पत्रकार सम्मेलनमा 'नो केबलकार' समूहले माबोलाई मोसो दलेको हो । प्रहरीले माबोको उजुरीका आधारमा बाँकी ८ पेजमा

# मुद्दा फिर्ता लिए कम्युनिष्टहरू मिल्ने

एकातिर नेकपा (एकीकृत समाजवादी) को दलीय मान्यता बदर गराउन सर्वोच्चमा मुद्दा हाल्ने, अर्कोतिर उसैसँग चुनावी तालमेल वार्ता अघि बढाउने ! आगामी चैत २३ गते हुने नेपाल बार एशोसिएसनको निर्वाचन वामपन्थी एकताको एउटा प्रस्थान बिन्दु बन्ने संभावना देखिदैछ ।

संसदीय अंकगणितले सत्ता राजनीतिमा कमजोर देखिएको एकीकृत समाजवादी कानुन व्यवसायी संगठनमा भने प्रभावशाली रहेको दाबी गरिन्छ । बारको निर्वाचनमा सो पार्टीनिकट एसपिएलएको मत निर्णायक देखिन्छ पनि । कांग्रेसको डिएलए र एसपिएलए मिल्दा सर्वोच्च बारमा जस्तै केन्द्रीय बारमा पनि राम्रै परिणाम निस्कने उसको हिसाबकिताब छ । त्यसैले एसपिएललाई कांग्रेसतिर जान नदिन वामपन्थी एकताको प्रस्तावसहित एमालेनिकट पिपिएलएका नेताहरू प्रयासरत छन् । स्मरण रहोस्, डिएलए, एसपिएलए र माओवादी केन्द्रको आरपिएलएबीच चुनावी तालमेल भएकै कारण बारको वर्तमान कार्यसमितिमा पिपिएलएको उपस्थिति शून्य छ । प्रचण्डलाई कांग्रेसबाट थुतेर एमालेसहितको सत्ता गठबन्धन बनाउँदा विश्वासको मतका लागि माधवकुमार नेपालको निवासमा पुगेजस्तै बारमा जीत सुनिश्चित गर्न एसपिएललाई नजिक्याउने एमाले रणनीति देखिएकोछ । तर, एकीकृत समाजवादी गठनविरुद्ध एमाले अध्यक्षको हैसियतमा केपी बाँकी ८ पेजमा

## कसले हेर्ने सेनाका यस्ता काण्ड ?

झण्डै एक खर्वको कल्याणकारी कोष रहेको नेपाली सेनाभित्र कुन स्तरको भ्रष्टाचार हुन्छ भनेर धेरैले अनुमानसम्म पनि गर्दैनन् । भनिन्छ, 'त्यहाँ ठूला हाकिमहरूले थाहै नपाई 'बिग सट' हान्छन् । तर तल्ला तहका कर्मचारीहरूले भने सुँघ्नसमेत भ्याउँदैनन्, पाउँदैनन् ।' पछिल्लो घटनामा भने अपवाद देखापरेको छ । जसमा पोखराको प्लटिङमा मुछिएर कुमार केसी जर्नेल अमेरिकातिर भागेझैं कल्याणकारी कोषको लगभग ६/७ करोड रुपैयाँ चप्काएर एकजना मेजर बेलायततिर भास्सिएका छन् । नाम हो, मेजर समीर गुरूङ । स्रोत भन्छ, खान पल्किएका उनी यदि कतै बाहिर सरुवा भइहाले भने तुरुन्तै जे जसरी भए पनि मिलाएर त्यहीं फर्कन्थे । अरुको भागसमेत आफै चप्काएपछि मात्र यो घटना सार्वजनिक भएको हो । यसरी रकम हिनामिना गरेर भाग्ने मेजरकी पत्नी पनि सिंहदरबारस्थित नरसिंह दलकी मेजर मन कुमारी थेबे हुन् । पिताचाहिँ केही वर्षअघि सैनिक अस्पतालबाट भूपू भइसकेका छन् ।

प्राय: जंगीअड्डामा यस्ता घटना भित्रभित्रै तैं चुप मैचुपको अवस्थामा राखिन्छ । यस्तै एउटा प्रकरणमा डेढ वर्षअगाडि मर्मत गर्न भनेर सेनाको एउटा हेलिकप्टर र त्यसको लागि आवश्यक रकमसमेत भारत पठाइएको थियो । प्रक्रिया नमिलाईकन पठाइएको हेलिकप्टर बनेर फर्कने ठेगान छैन । न त पठाइएको रकम नै फिर्ता हुने अवस्था छ । तर यसरी मुलुकलाई ठूलै नोक्सान हुनेगरी अव्यवस्थित ढंगले काम गर्ने व्यक्तिलाई कारबाही गर्ने दिशातर्फ भने कोही अग्रसर भएको पाइन्न । समाचार स्रोतका अनुसार बाँकी ८ पेजमा

# हाकिमद्वारा आफ्नै अड्डामा हातपात

एक जना कार्यालय प्रमुखले जनआस्थालाई सूचना चुहाएको भन्दै आफ्ना सेकेण्ड म्यानको घाँटी निमोठ्न खोजेका छन् । घटना ललितपुरस्थित, पाटन औद्योगिक क्षेत्रको हो र प्रसङ्ग भने हप्ता दिन अगाडिको ।

राजपरिवारको नाममा रहेका करोडौं मूल्य पर्ने सुन, हिरा, मोतीजडित सयौं तक्माबाट असली धातु निकालेर नक्कली धातु जडान गरिएको बारे जनआस्थामा समाचार प्रकाशन भएको थियो । उक्त समाचार आएसँगै गृह, प्रदेश मातहतको उद्योग मन्त्रालयमात्र होइन, सोही कार्यालयमा समेत हलचल भयो र त्यहाँका कार्यालय प्रमुखले सूचना चुहाएको भन्दै आफूपछिका कर्मचारीको घाँटी ड्याकिदिए । सुरक्षाकर्मीले छेकेका कारण त्यस दिन थप अप्रिय घटना भने हुन नपाएको बुझिएको छ । पशुपतिनाथ मन्दिरमा सुनको जलहरी राख्दा भएको अनियमितताभन्दा ठूलो सो प्रकरणमा बाग्मती प्रदेश उद्योग तथा वाणिज्य कार्यालय सोझै जोडिन्छ । राजपरिवारको नाममा रहेका १८९ थरी तक्माका हजारौं परिमाण ०७१ साल साउन १४ देखि पाटन औद्योगिक क्षेत्रभित्र राखिएका छन् । जसमा महेन्द्रमाला १ थान, नेपाल प्रताप भाष्कर २ सेट, नेपाल प्रताप भाष्कर स्वल्पाकार १० सेट, नेपाल प्रताप भाष्कर ५ थान, महागौरव तेजश्वी त्रिभुवन श्रीपद पहिला २ थान, महागौरव तेजश्वी त्रिभुवन श्रीपद पहिला स्वल्पकार ४ लगायत उक्त कार्यालयका नयाँ, पुराना र भाँचिएका दराजमा बाँकी ८ पेजमा

# अमेरिकामै अरबौं डलर तिराइयो

नेपाललाई यसै हल्लै हल्लाको देश भनिएको हैन । जवानी छउञ्जेल विदेशमा कुस्त कमाएको भ्रम छर्दै जीवनको अन्तिम घडी सोल्टी होटेलमा बिताएको सारा बील बबरमहल कर कार्यालयअगाडिको घर ६२ लाखमा बेची पत्नी नाना र ज्वाईं सैलेश बास्कोटाका साथीहरू दिपक, राजेशलाईसमेत थप झण्डै एक करोड तिर्न लगाएका रसेन्द्र भट्टराईबारे युवा पुस्तालाई कमै मात्र जानकारी होला । कान्तिपुर र काठमाडौं पोष्टद्वारा खर्बपतिको रुपमा ब्यानर न्युजमार्फत प्रस्तुत गरिएका उनै पात्र अन्तत: ०६२ जेठको एक दिन गुमनाम मृत्यु वरण गर्न बाध्य भएका थिए । त्यतिबेला स्पेन पुगेका तत्कालिन आइजिपी र मन्त्रीहरू उनको आफ्नो बोइङ्ग जेट विमान, थुप्रै बिलासी कारहरू र भव्य बङ्गलो देखेर चकित पर्ने गरेका थिए । धेरैले कल्पनै गरेनन् कि अमेरिका, बेलायत, फ्रान्स र स्पेनमा राताराता उनको यति धेरै वैभव छ भनी देखाइएको प्रकरण वास्तविकता थियो या छलकपटपूर्ण प्रचारबाजी ! रवि लामिछानेका सवा लाख डलरको मासिक कमाइ छाडी देश सेवा गर्न आएको गफ पत्याउने यही समाजमा कुनै बेला मीनासिंह खड्काले पनि उत्पातै होहल्ला मच्चाइन् । गेट कलेजकी अध्यक्ष खड्कालाई अमेरिकी राष्ट्रपति पत्नी मिसेल ओबामाले फोन गरेको, हिलारी क्लिन्टनको चुनावी अभियानलाई सघाएको, ४० वर्षअघि हजारौं डलर कमाएको र हार्वर्ड एवम् युनिभर्सिटी अफ क्यालिफोर्नियाबाट फरक बाँकी ८ पेजमा

## तीन महिनामा सक्छ नेपालले ?

नेपाल अधोगतिमा लाग्नुको प्रमाण पेश गर्न अचेल सबैले राख्ने गरेको एउटा तथ्य हो, ग्रे लिष्ट वा उच्च जोखिमयुक्त राष्ट्रको सूचीमा परेको घटना ।

गत हप्ता नेपालसँगै लाओससमेत यो सूचीमा समेटिएको छ, पेरिसमा सम्पन्न फाइनान्सियल एक्सन टाक्सफोर्स नामक अन्तर्राष्ट्रिय संयन्त्रको बैठकबाट । नेपालको तहबाट यसबारे लगातार विदेशीहरूसँग संवाद गरिरहेका एक उच्च अधिकारीका अनुसार वर्षमा तीनपटक यो संयन्त्रको बैठक बस्ने र सूची अपडेट गरिने हुँदा कहिले कुन लिष्टमा त कहिले कुन लिष्टमा पर्नु नियमित प्रक्रिया नै हो । त्यसैले अहिले जसरी बर्वादै भयो भनिँदैछ, त्यो भनिरहनु आवश्यक थिएन । बरु दिइएको सातबुँदे सुधारलाई कार्यान्वयनमा ल्याउने हो भने हामी चाँडै त्यो सूचीबाट बाहिर आउन सक्छौं । त्यसो त नेपाललाई दुई वर्षको समय दिइएको बाँकी ८ पेजमा

# माओवादी नेताका पुत्र खानमै मस्त

बुवा तत्कालीन मुख्यमन्त्री, छोराको कामचाँहि ठगी ! माओवादी केन्द्रका एक भिआइपी पुत्रले आफ्नै गाउँ ठाउँका मानिसलाई रुवाएको पाइएको छ । रोल्पाली नेता जोखबहादुर महरा जो लुम्बिनी प्रदेशका पूर्व मुख्यमन्त्रीसमेत हुन्, उनैका छोरा तुकमानले धेरै स्थानीयबाट पैसा लिएर फिर्ता नदिई भागिभागी हिँड्ने गरेको उजुरी परेको छ । तुकमानबाट ठगिने सूचीमा एक जना पत्रकार पनि छन् । मोटरसाइकल बेचेको पैसा माग्दामाग्दै बिसी थरका पत्रकार हत्तु भइसकेका छन् । रोल्पाकै उनले २०७९ मंसिर ४ गतेको प्रतिनिधिसभा तथा प्रदेशसभा निर्वाचनताका आफ्नो मोटरसाइकल तुकमानलाई चार लाख रुपैयाँमा बेचेका थिए । अखिल क्रान्तिकारीका पूर्व उपाध्यक्ष तथा हाल पार्टीको लुम्बिनी प्रदेशका सदस्य तुकमानले केही समयमै पैसा चुक्ता गरिदिने प्रतिबद्धता जनाए । स्थानीय भएको हुँदा उनले नकार्न सकेनन् । यद्यपि, दुई वर्ष बितिसक्दा पनि उनको हातमा पैसा परेको छैन । तुकमानले मोटरसाइकल चलाएर थोत्रो बनाइसके, उनीचाँहि पैसाकै पर्खाइमा छन् । उनका अनुसार तुकमानले फोन नै उठाउँदैनन् । अति नै भएपछि जोखबहादुरसामु गुनासो पोखेका थिए ।

जोखबहादुरले केही दिनमा रकम फिर्ता गर्ने वचन दिएको उनको जिकिर छ । भन्छन्, 'तुकमानले त फोन नै उठाउँदैनन् । त्यसैले मैले बुवासँग कुरा गरें । बाँकी ८ पेजमा

# एक लाखको चिया, इज्जत छियाछिया

मन्त्रीका आसेपासेले खाने,लेखाले भुक्तानी नदिने ! यस्तो हुँदा रमिता छ,रामशाह पथतिर । मन्त्रीको सचिवालयमा कार्यरत कर्मचारीहरूले गत माघ महिनामा मात्र चिया र खाजा शीर्षकमा एक लाखभन्दा बढी सकाए ।

स्वास्थ्य मन्त्री प्रदीप पौडेलको सचिवालयमा कार्यरत ८ कर्मचारीले खाएको चियाचमेना वापत गएको बील लेखाले भुक्तानी गर्न नसकिने अडान लिएपछि अहिले कर्मचारीबीच द्वन्द्व शुरु भएको छ ।

यिनै कर्मचारीले सहसचिवको गाडी तानेर चढेकोदेखि सरुवामा व्यापक चलखेल गर्दै आएको गुनासो छ । मन्त्रीको निजी सचिव छन्,उपसचिव शालिकराम दाहाल र शाखा अधिकृत विश्वविन्धु रेग्मी । यसअघि गगन थापाको सचिवालयमा बसेका दाहालले नै हो सहसचिवको गाडी खोसेर आफैं चढ्न थालेको । प्रधानमन्त्री केपी शर्मा ओलीले आफ्नो निजी सचिवमा स्वास्थ्य मन्त्रालयबाट विनोद कुँवरलाई लगेपछि उनले चढ्दै आएको अत्याधुनिक गाडी जनसंख्या सचिव ढुण्डी निरौलाले प्रयोग गर्दै आएका थिए तर निजी सचिवले सहसचिवको सोही गाडी चलाउन थालेका छन् । निरौलालाई पिक अप, थोत्रो गाडी हुँदै हैरान पारिएपछि यो बिषयमा भर्खरै सेवानिवृत्त सचिवहरू रोशन पोखरेलदेखि हरि मैनालीसम्मलाई दुखेसो पोख्न पुगे । स्रोतका अनुसार मन्त्रीको बाँकी ८ पेजमा

## दिल्ली अनि देउवाको दु:ख

पूर्वप्रधानमन्त्री तथा काँग्रेस सभापति शेरबहादुर देउवाको पूर्वनिर्धारित भारत भ्रमण अन्तिम समयमा रोकिएपछि राजनीतिक वृत्तमा विभिन्न टिप्पणी भइरहेको छ । वर्तमान सत्ता गठबन्धनसँग दक्षिणी छिमेकी खुशी नरहेको चर्चाका बीच फागुन ८ गतेलाई उक्त मिति तय भएको थियो । तर, पत्नी आरजु राणा ओमानबाट घर फर्कने र देउवा बूढानीलकण्ठस्थित निवासबाट विमानस्थलतर्फ जाने तयारी हुँदै गर्दा अचानक यात्रा रद्ध गरियो ।

एमालेसँग मिलेर सत्ता गठबन्धन बनाएकोमा भारतीय संस्थापन पक्ष शुरुदेखि नै काँग्रेस र देउवासँग सन्तुष्ट थिएन । असार १७ गते मध्यराति दुई पार्टीका शीर्ष नेताबीच सात बुँदे सहमतिमा हस्ताक्षर भएको भोलिपल्ट बूढानिलकण्ठ पुगेर राजदूत नवीन श्रीवास्तवले माओवादीसँगको पुरानै गठबन्धनमा फर्किन घुमाउरो दबाबसमेत दिएका बाँकी ७ पेजमा

## नोट अफ डिसेन्ट

**सिके नायक**



# नेपाल-भारत दोस्तीमा एउटा ठूलो दाग

मेरो गृह प्रदेश भारतको उडिसास्थित केआइआइटी युनिभर्सिटीमा अध्ययनरत छात्रा प्रकृति लम्सालको मृत्युले दुई मुलुकबिचको कूटनीतिक सम्बन्धमै असर पर्ने गरी राजनीतिक लफडा सिर्जना निम्त्याएको छ । घटना भएलगत्तै विश्वविद्यालयले नेपाली विद्यार्थीलाई निकाल्ने निर्णयका कारण नेपालमा उत्तेजना फैलिएको छ । घटनालाई लिएर स्वयं नेपाली प्रधानमन्त्री केपी शर्मा ओली सत्यतथ्य जान्न अग्रसर भएको पाइयो । नरेन्द्र मोदीको भारतीय सरकार र नेपाल सरकारबिच सम्बन्ध त्यसै पनि घनिष्ट हुन नसकिरहेको बेला उत्पन्न यो घटनाले समस्या थपेको छ । जुन राज्यमा यो घटना भयो, त्यहाँको सरकार पनि भाजपाकै हो ।

बि. टेक कम्प्युटर साइन्सतर्फ तेश्रो वर्षमा अध्ययनरत २१ वर्षीया छात्रा प्रकृति लम्साल आफ्नै कोठामा झुण्डिएको अवस्थामा फेला परेकी थिइन् । उनलाई आत्महत्या गर्न प्रोत्साहित गर्ने छात्र मेकानिकल इन्जिनियरिङ विषयमा अध्ययनरत नेपालसित सीमा जोडिएको भारतीय राज्य उत्तरप्रदेशका हुन् । घटना त्यसबेला थप पेचिलो बन्यो, जब ती विद्यार्थी उत्तरप्रदेश राज्यको सत्तारुढ दल भाजपाका नेताको छोरा भएको कुरा बाहिर आयो । नेपाली विद्यार्थीले मृतकको शव, उनले प्रयोग गर्ने मोबाइल र ल्यापटप आफूहरूलाई बुझाउन माग गरेपछि कलेज परिसरमा तनाव सिर्जना भयो । उता घटनाको छानबिन गर्न सहज् होस् भनेर प्रहरीले छात्राको कोठा 'सिल' गरिसकेको थियो । पोष्टमार्टमका निम्ति शव फोरेन्सिक एक्स्पर्टकोमा पठाइसकिएको थियो । मोबाइल र ल्यापटपबाट धेरै प्रमाण जुट्ने भएकाले ती सामग्री पनि प्रहरीले कब्जा गरेकै थियो । लगत्तै प्रहरीले छात्राको 'प्रेमी' लाई हिरासतमा लियो र सोधपुछ थाल्यो । तर नेपाली विद्यार्थीहरूको माग थियो- आफूहरूमाथि लगातार दुर्व्यवहार गर्दै आइरहेका होस्टेल वार्डेनलाई निलम्बन गरियोस् । उनीहरूको आरोप रह्यो- मृतकले आफूमाथि शारीरिक र मानसिक टर्चर भइरहेको भनी पटक-पटक सूचना दिँदा पनि वार्डेन र कलेज प्रशासन मूकदर्शक बनिरहे । यसबीच अडियो टेप भाइरल भयो, जसमा आरोपित छात्रले दुर्व्यवहार र अपमानजनक शब्द प्रयोग गर्ने गरेको प्रष्ट सुन्न सकिन्थ्यो । उनले मृतक छात्रा मात्र होइन, बाँकी ८ पेजमा

# सालीलाई पनि भ्रष्टाचारमा सेकिँदै

अख्तियार खेप्ने पालो भिनाजुपछि सालीको आएकै हो त ? घटनाक्रम त्यही दिशातिर उन्मुख छ ।

बैकुण्ठ अर्याल मुख्यसचिव हुँदा आधा दर्जन भ्रष्टाचार काण्ड लागेर निलम्बनमा परेका थिए । अन्त:शुल्क स्टिकर छपाइमा भएको भ्रष्टाचारमा संलग्न भएको भन्दै असार ९ गते अख्तियार लागेपछि निलम्बनमा परेका अर्याललाई कात्तिक १४ मा विशेषले सफाइ दिएपछि निलम्बन फुकुवा भयो । ४ मंसिरमा राष्ट्रिय योजना आयोगबाट राजीनामा दिएर घर फर्किए । उनी पछि अख्तियारको सामना गर्ने पालो एकाघरकै सालीलाई आइलागेको छ ।

अहिले सिञ्चाइ सचिवको जिम्मेवारीमा छिन्, सरिता दवाडी । अघिल्लो वर्ष मंसिरमा सचिवमा उक्लिएर उर्जा, जलस्रोत अनुसन्धान तथा विकास केन्द्रको कार्यकारी निर्देशक रहेकी उनी बढुवापछि सिञ्चाइ मन्त्रालयको जिम्मेवारीमा पुगिन् । निजामती सेवामा प्रवेश गरेको एक दशकमै सचिव बनेकी उनले अवकाशपछि पेन्सन सुविधा पाउने छैनन् । उनैले मन्त्री दिपक खड्कासँग एक ठेकेदारलाई पोस्ने गरी कार्टेलिङ गरेको बिषय सार्वजनिक खरिद अनुगमन कार्यालय हुँदै अख्तियारसम्म पुगेको छ ।

एक जना ठूला निर्माण व्यवसायीलाई पोस्ने गरी मन्त्रीले गत मंसिर तेश्रो साता सिञ्चाइ विभागको महानिर्देशकमा देवराज निरौलालाई नियुक्त गरेका थिए । सञ्जीव बराललाई मन्त्रालयमा तानेर निरौलालाई महानिर्देशक बनाइएसँगै ठेकेदार पोस्ने गरी विभागले सिक्टा सिञ्चाइ आयोजनाको ठेक्का प्रक्रिया अगाडि बढायो । यही लफडामा मुछिइन् सचिव दवाडी । निश्चित पार्टीलाई मात्र पोस्ने गरी स्पेसिफिकेसन लक्ड गरिएको र सोहीअनुसार शर्त बनाइएको भन्दै यो प्रकरणमा अख्तियारले समेत हात हालेको हो । झण्डै साढे २ अर्ब रुपैयाँको सिक्टा सिञ्चाइअन्तर्गत ठेक्का प्रक्रिया अगाडि बढाउँदा न्यूनतम योग्यता पछिल्ला १० वर्षमध्ये कम्तीमा ३ वर्ष ६२ करोड ५८ लाख वार्षिक आम्दानी गरेको हुनुपर्ने, आवेदन दिने कम्पनीको नगद प्रवाह क्षमता कम्तीमा १० करोड हुनुपर्ने, टनेल (सुरुङ) निर्माणतर्फ कम्तीमा ७५ करोड १० लाख रुपैयाँबराबरको काम गरेको हुनुपर्ने शर्त राखिएको छ । यस्तो शर्त ठेकेदार कम्पनी शर्मा एण्ड शर्माको मात्र पुग्ने बताइन्छ । नेपालकै टप ५ भित्र पर्ने उक्त कम्पनीलाई मात्र मिल्ने गरी टेण्डर (बोलपत्र) खोलिएको भन्दै निर्माण व्यवसायी महासंघले नै सार्वजनिक खरिद अनुगमन कार्यालयलाई गुहार्न पुगेको थियो । व्यवसायीहरूका अनुसार, शर्मा एण्ड कम्पनी र कुमार श्रेष्ठको निर्माण सेवालाई काम दिने गरी सिञ्चाइ मन्त्रालय र विभागले सहयोग गरेको दाबीसहित माघ अन्तिम साता सार्वजनिक खरिद अनुगमनको कार्यालय गुहारिएको हो ।

यस्तै, प्रधानमन्त्री केपी शर्मा ओलीकै चासोभित्र परेको र साउनमै तीन सय दिनभित्र बनाउने भनिएको त्रिवि क्रिकेट रंगशालाको ठेक्का प्रक्रियामा समेत यस्तै बदमासी भएको भेटिएको छ । खासमा उक्त ठेक्का प्रक्रिया खेलकुद परिषद्बाट हुनुपर्ने थियो तर चक्रवर्ती कण्ठ प्रमुख रहेको संघीय सचिवालय निर्माण तथा व्यवस्थापन कार्यालयमार्फत काम अघि बढ्यो । अर्थ मन्त्रालयलाई पत्रै लेखेर त्यसको ठेक्का अगाडि बढाइएको हो । त्यहाँ जडान हुने फ्लड लाइटको ठेक्का प्रक्रियामा समेत नीतिगत भ्रष्टाचारको आशंका गरिएको छ । झण्डै ६२ देखि ६३ करोड रूपैयाँ लागत अनुमान गरिएको उक्त ठेक्काको स्पेसिफिकेसन बाँकी ८ पेजमा

## भङ्ग गरिएलान् त यी अड्डा ?

अर्थतन्त्रको समग्र क्षेत्रमा सुधारका लागि रायसहितको प्रतिवेदन पेश गर्न सरकारले पूर्व अर्थसचिव रामेश्वर खनालको संयोजकत्वमा गठन गरेको आर्थिक सुधार सुझाव कार्यदलले आफ्नो प्रारम्भिक प्रतिवेदन बुझाएको छ, जसमा लगभग १८ वटा ऐन र तीअन्तर्गत गठित निकाय नै खारेज गर्न सिफारिस गरिएको छ । ९१ वटा सुझाव समेटिएको प्रतिवेदनमा विशेषगरी राज्यलाई अतिरिक्त आर्थिक भार सिर्जना गरिरहेका तर कतिपय अन्य ऐन, कानुन र नियमावलीमार्फत समेटिएका सरकारी निकाय र संरचनाहरूलाई बन्द गर्न भनिएको हो ।

उक्त कार्यदलका सदस्यहरूमा राष्ट्रिय योजना आयोगका सदस्य डा. प्रकाशकुमार श्रेष्ठ, त्रिभुवन विश्वविद्यालय अर्थशास्त्र केन्द्रीय विभागका प्रमुख प्राडा. रामप्रसाद ज्ञवाली, डा. विश्वास गौचन र नीति अनुसन्धान प्रतिष्ठानका वरिष्ठ अनुसन्धानकर्ता डा. कल्पना खनाल छन् । बाँकी ८ पेजमा

**आस्था प्रकाशन प्रा. लि.को निमित्त**

| | | |
|---|---|---|
| सम्पादक | : | किशोर श्रेष्ठ |
| प्रबन्ध सम्पादक | : | राजेन्द्र स्थापित |
| सह–सम्पादक | : | हरि गजुरेल र साहस न्यौपाने |
| कार्यालय | : | सानेपा, ठाडोढुंगा, ललितपुर |
| फोन | : | ५५४१५५२, ५५२२५५१ |
| इमेल | : | jana . aastha@gmail . com |
| वेबसाइट | : | www . janaaastha . com |
| मुद्रण | : | सुजल अफसेट प्रेस, बागबजार, फोन : ४२३३४५९ |

## सम्पादकीय

### अमेरिकी अनुदान रोकिँदा फाइदा कि घाटा !

अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले अस्थायी रोक्कालाई जारी राखे भने एमसिसीमार्फत् नेपाल सरकारले विद्युत ट्रान्समिसन लाइन र बाटो बनाउन लगाएको ठेक्का अलपत्र हुने अवस्था सिर्जना भएको छ । त्यसको दायित्व सम्पूर्ण रुपमा नेपाल सरकारले एकलौटी व्यहोर्नुपर्ने खतरा छ । अमेरिकी सरकारले व्यहोर्ने मात्रै जम्मा ५५ अर्बको सो आयोजनामा नेपाल सरकारलाई झण्डै ३०/४० अर्बको दायित्व सरेको छ । नेपाल सरकार आफैं टाट पल्टिने बेलामा सरेको यो दायित्वलाई कहाँबाट कसरी व्यहोर्ने ? यसबाहेक उतैको सहयोगमा वित्तीय संघीयतालाई बल पुर्‍याउन स्थानीयदेखि प्रदेश सरकारसम्मको लेखा, बजेट, योजना, कानुन, रिपोर्टिङ, अनुगमन, मूल्याङ्कनलगायतका सम्पूर्ण सिष्टम बसाउनका लागि योग्य र दक्ष जनशक्ति तयार पार्ने, तिनीहरूको म्यानुयल र नियम कानुन बनाउनेजस्ता मुख्य उद्देश्य थियो । करिब २ अर्ब ५० करोडजतिको प्रोजेक्ट हो त्यो । पहिला यस्ता कामको लागि अनुदान माग्ने चलन थिएन । फेरि पनि त्यस्तो रकम नआउँदैमा नेपाललाई के फरक पर्छ र ? भन्ने एउटा तर्क होला । सँगसँगै अर्को पाटो के छ भने त्यस्तो कार्यविधि र ऐनकानुन बनाउने नेपाली विज्ञहरूले पारिश्रमिकस्वरुप ३० लाख रुपैयाँसम्म पाउँथे । यस्ता विज्ञले त्यति पारिश्रमिक बुझ्दा २० प्रतिशत त सरकारलाई कर नै तिर्नुपर्थ्यो । त्यो अब बन्द भयो । भाडामा कार्यालय सञ्चालन गरी बसेको अवस्थामा त्यस्तो घर छोड्दा भाडावालको आम्दानी र सरकारले उठाउने घर बहाल कर पनि सुक्यो । यी लगायत दैनिक उपभोग्य सामग्री खरिद गर्दा र कफी सपलगायतमा छिर्दा हुने व्यापार व्यवसाय पनि थोरबहुत प्रभावित हुने नै भयो । यसरी एउटा आम्दानीमार्फत् धेरै प्रकारका आर्थिक गतिविधि सञ्चालन भइरहेका हुन्छन् । सय रुपैयाँ खर्च गर्दा २५ रुपैयाँ कर वा अन्य धेरै कारणले घुमिफिरी नेपाल सरकारकै राजश्वको रुपमा ढुकुटीमा आउँछ भन्ने मान्यता छ । जोसुकैले प्रत्यक्ष कर नतिरे पनि अप्रत्यक्ष रुपमा घर बनाउँदा प्रयोग हुने सिमेन्ट, रड, गिट्टी, बालुवालगायतमा अन्तशुल्क लाग्छ । त्यस्तो पैसाले रोजगारी सिर्जनामा सहयोग गरेको थियो । यी काम स्वाभाविक रुपमा थोरबहुत प्रभावित भएका छन् ।

युएसएआइडीमार्फत् आउने यस्ता सहयोग बन्द भएपछि एक हदसम्म आर्थिक क्रियाकलापमा सुस्तता आउने नै देखिन्छ । त्यताको अनुदान सहयोग वा ऋणबापत झण्डैझण्डै ५०/६० अर्ब रुपैयाँ नेपाली बजारमा निस्किन्थ्यो । पहाड र तराई मधेशतिर युएसएआइडीको सहयोगमा सञ्चालित तालिम वा अन्य कार्यक्रममा भाग लिन जानेले छेउको छाप्रे होटल वा पान पसलमा लोकल कुखुरा र मीठा वा पिला पान बङ्गाली पत्तामा खान्थे । तर अब यस्तो जमात बेलाबेला जम्मा नहुने भएपछि साना होटल र पान पसले पनि प्रभावित हुनेछन् । सामाजिक र राजनीतिक दृष्टिकोणले हेर्दाचाहिँ युएसएआइडी होस् वा अन्य निकायले दिने अनुदान वा परनिर्भर बनाउने योजना यस्ता सबै क्रियाकलाप बन्द गरिनु नेपालकै हितमा छ । ढिलोचाँडो जेहोस् ट्रम्प सरकारले गरेको यस फैसलाले नेपाललाई दीर्घकालीन रुपमा निकै ठूलो प्रभाव पार्ने देखिन्छ । किनभने एमसिसी या यस्तै यस्तै नाममा नेपाली भूमिलाई रणनीतिक प्रतिस्पर्धाको मैदान बनाइँदै आएको थियो । मुलुक पक्ष विपक्षमा बाँडिएको थियो ।

अब गैरसरकारी संस्था चलाएर हाम्रो धार्मिक तथा सामाजिक मूल्यमान्यताविरुद्ध गरिने गतिविधिहरू पनि कम हुने भएका छन् । जान्ने हो र सिक्ने हो भने यसरी विदेशी पैसा रोक्ने कामले समग्रमा नेपालीलाई फाइदा नै पुग्न सक्छ । पौरखीका लागि नयाँ सम्भावनाका ढोकाहरू खोल्ने प्रयास हुन्छ । विदेशी सहयोग रोकियो, यसो भयो उसो भयो भनेर विस्मात् मान्नुभन्दा नयाँ विकल्प, नयाँ बाटो के भन्नेतर्फ सोच्दा र त्यसअनुरुप अघि बढ्दा सबैको लागि हित नै हुन्छ ।

## संसद छाडी मान्यहरू कुम्भ मेलातिर सरासर

संसद चलेको दुई दिनसम्म बैठकमा अनुपस्थित र कृषिसम्बन्धी संसदीय समितिमा पनि गैरहाजिर सांसद सरस्वती सुब्बा कुम्भ मेलामा देखिएकी छन् । सामान्यतया माननीयहरूले देश छोड्दा कारणसहित संसदलाई जानकारी गराउने, आफ्नो दलका नेता तथा सचेतकलाई सूचना दिनुपर्ने व्यवस्था भएपनि नटेरेर बेखबर हुँदा सामाजिक सञ्जाल टिकटकमार्फत् वास्तविकता बुझ्नुपर्ने बाध्यता छ । सँगै एमाले बागमती प्रदेशका पूर्व सदस्य जङ्गप्रसाद (जेपी) सिल्वाल पनि कुम्भ स्नानमा गएको बताइन्छ । ती दुईले पोष्ट गरेका तस्वीरहरू हेर्दा गाडी एउटै, होटल एउटै, बाटो एउटै, स्थान एउटै भए पनि फोटो भने फरक फरक शैलीमा खिचिएका छन् । यसबारे जनआस्थाको सवालमा सिल्वालले कुम्भ गएको कुरालाई ठाडै अस्वीकार गर्दै मान्यसँग भेटघाट नभएको बताएका छन् । दुवैसँग परिचित केही नेता तथा शुभचिन्तकले मायाप्रेम नै हो भने पनि कानुन र रीत पुर्‍याएर चयन गरे कसले रोक्न सक्छ र ? यस्तो कृयाकलापले पार्टीको पनि बदनाम हुने भन्दै महेश बस्नेत र ऐन महरजस्तो व्यहोरा नदेखाउन सुझाव दिएका छन ।

फागुन ४ गते आइतबार संसद सचिवालयमा आयोजित लेखा र कृषि समितिको गोष्ठीमा समेत सांसद सुब्बा अनुपस्थित थिइन् । गोष्ठीमा विधेयकहरूलाई द्रुतगतिमा कसरी अगाडि बढाउन सकिन्छ भन्नेबारे छलफल भएको थियो । बैठकमा उनलाई नदेखेपछि एमाले प्रमुख सचेतक महेश बर्तौलाले खोजविन गर्दा कुम्भ गएको पत्ता लाग्यो । सिल्वाल र सांसदका भिडियोहरू सामाजिक सञ्जालमा फरक फरक समय र दिनमा पोष्ट हुने गरेका छन् । त्यसो त सरकारले ल्याएको अध्यादेश पारित गर्न तम्तयार भई बस्नु पर्ने सांसद अनुपस्थित देखेपछि सचेतकको टाउको दुख्ने नै भयो । आइतबारको बैठकमा एमाले, काँग्रेस र रास्वपाका केही महिला सांसदले सुब्बा हराएकोमा चासो व्यक्त गरेका थिए । सांसदहरू सकभर अनुपस्थित हुने, भए पनि पुरै समय नबस्ने, बैठकमा कोरम नपुग्ने, बैठक प्रभावित भई महत्वपूर्ण विषयहरू थाती हुने गरेका छन् भने माओवादी, रास्वपा र राप्रपाले पुरै समय बसेर सरकार र एमाले तथा काँग्रेसविरुद्ध भाषण दिएका वखत त्यसको प्रतिवाद गर्ने कोही नहुने भएपछि सांसदहरूको आलोचना बढिरहेको अवस्था छ । यसअघि पनि यसैगरी अधिवेशन शुरु भएकै दिन एमाले सचेतक सुनिता बराल अफ्रिकाको मालावी गएकी थिइन् ।

कलङ्कीमा बहिनीसँग बस्दै आएकी अविवाहित सुब्बा अहिले भक्तपुरस्थित सिल्वालकै घरमा डेरा सरेको स्रोतको दावी छ । दशैं तिहारको बीचमा उनले कलङ्कीको डेरा छोडेकी थिइन् । सिल्वाल जुगल गाउँपालिका वडा नं.४ बाट वडा सदस्यमा उठेर जिल्ला समन्वय समिति उपप्रमुखको उम्मेदवार हुँदा २ मतले पराजित भएका थिए । भक्तपुर घर बनाएका सिल्वालको पुर्ख्यौली घर सिन्धुपाल्चोकको जुगलमा श्रीमती बस्छिन् भने दुई छोरी विदेशमा अध्ययनरत छन् । भक्तपुरमा बसेर नेता सिल्वालले ठेक्कापट्टाको व्यवसाय गर्दै आएका छन् । सिल्वालका छोरीहरू विदेश गएपछि सुब्बा डेरा सरेको दावी गरिएको छ । त्यसो त सिल्वाल अखिलको जिल्ला अध्यक्षसमेत थिए ।

सांसद सुब्बा समानुपातिक सांसद हुन् भने एमालेको भूमिहीन सुकुम्बासी संगठन सर्लाही सचिव, भूमि अधिकार मञ्च नेपालको जिल्ला अध्यक्ष हुँदै केन्द्रीय कोषाध्यक्ष, सचिव, महासचिव र अध्यक्षसम्मको भूमिका निर्वाह गरेकी छन् ।

# ट्रम्प, मस्क र 'ए आई' को खतरनाक अन्तर्घुलन



**राजेश मिश्र**

डाक्टर मेंगेलले एडोल्फ हिटलरको दाहिने हातबाट एक लिटर र देब्रे हातबाट अर्को एक लिटर रगत झिके । त्यो दुई लिटर रगत ब्राजिल पठाइयो । जर्मन तानाशाहका अनुयायीहरू 'प्लान बी' को तयारी गर्दैथिए । उनीहरूको अवचेतन मनले भन्दै थियो- विश्वमा आर्यन मूलको आधिपत्य कायम गर्ने आफ्नो योजनालाई बहुराष्ट्रिय सेनाले भत्काउने सम्भावना छ । दक्षिण अमेरिकी मुलुक ब्राजिल नाजीहरूको सुरक्षित शरणस्थल थियो । युरोपबाट लुटिएका धन सम्पत्ति स्विट्जरल्याण्डको बैंकमा जम्मा गर्नुअघि त्यतै थुपारिएको थियो । यो सन् १९४० तिरको कुरा हो ।

१९७० तिर एक यहुदी बूढा दृश्यमा आए । याकोब लिबरम्यान थियो उनको नाम । तीस वर्षअघि मानवताविरुद्ध अपराध गरेका नाजीहरूलाई खोजेर कानूनी कठघरामा उभ्याउने कामलाई उनले आफ्नो जीवनको अभियान बनाएका थिए । ब्राजिलको एउटा होटलमा नाजीहरूको गोप्य बैठक चल्दै थियो । उनले होटलको एउटा कर्मचारीलाई त्यो कोठामा जासुसी यन्त्र जडेर कुरा सुन्न सकिने व्यवस्था मिलाएका थिए ।

बैठकमा डाक्टर मेंगेलले भनेको सुनियो, 'महान फ्युहरर अब हामीबीच हुनुहुन्न । तर उहाँले छोडेर गएको अद्‌भूत उपहार, उहाँको रगत हामीसँग छ । त्यसबाट हामी अरु धेरै फ्युहरर जन्माउन सक्छौं । हाम्रो अभियान रोकिएको छैन । हामीले संसारभरिका जैविक बाबु आमाको रगतमा त्यो 'फ्युजन' गर्नु जरुरी छ । अहिले हामीसंग ७४ जना सम्भावित जोडीको सूची छ । तिनका बाबुलाई जसरी महान हिटलरका बाबु दुर्घटनामा मरेका थिए, त्यसरी नै मार्नु जरुरी छ । हत्या हो, तर दुर्घटना देखाउनु हाम्रो उद्देश्य हो । यो हो ती ७४ जना जोडीको सूची ।'

कथा लामो छ । तर लिबरम्यान कसैगरी त्यो सूची आफ्नो हात पार्छन् । यो षड्यन्त्रको सूचना इजरेलको खुफिया संस्था मोसादको कानमा पर्छ । इजरेलीहरू याकोब लिबरम्यान र त्यो सूची खोज्दै आउँछन् । अन्तत: याकोब मोसादको फन्दामा पर्छन् । मोसाद ती ७४ जनै जैविक मातापिताले नयाँ हिटलर जन्माउनुअघि नै उनीहरूको जीवन समाप्त गर्न चाहन्थ्यो तर याकोब अन्त्यमा त्यो सूची चपाएर निलिदिन्छन् । मोसाद रित्तै हात फर्किन्छ । नयाँ हिटलर जन्मिंदैन ।

यो ईरा लेभिन नामक एक लेखकको काल्पनिक कृति हो । यसबारे सन् १९७८ मा एक धुम मच्चाउने सिनेमा पनि बनेको छ, 'द ब्वाईज फ्रम ब्राजिल' । कथा काल्पनिक भए पनि एउटा व्यक्तिको रगतको 'जीन' लिएर त्यसबाट सयौं मान्छे जन्माउन बैज्ञानिक रुपले सम्भव छ । बैज्ञानिकहरूले यो प्रविधिलाई 'क्लोनिंग' नाम दिएका छन् ।

सन् १९९६ मा यसै प्रविधिबाट एउटा भेंडाको जन्म भयो । यसलाई 'डली' नामाकरण गरियो । वैज्ञानिकहरू उत्साहित थिए । तर यसले मानवीय चेत र नैतिकताका बारेमा एउटा नयाँ बहसलाई जन्म दियो । सन् २००५ मा संयुक्त राष्ट्रसंघले 'मानव क्लोनिङ्ग घोषणापत्र' जारी गर्‍यो । जसमुताविक विज्ञानले एउटा मान्छेको अर्को 'क्लोन' उत्पादन गर्न सक्दैन । तर यो घोषणापत्र बाध्यकारी छैन । बैज्ञानिकहरू केवल नैतिकताका आधारमा रोकिएका छन् । कुनै पनि शक्तिशाली मुलुकको शासकले नैतिकताको बन्धन चुँडालेर यो 'प्रोजेक्ट' लाई निरन्तरता दिन सक्छ । त्यस अवस्थामा कुनै पनि स्थापित मूल्य र मान्यताले यसमा रोक लगाउन मिल्दैन । यो प्रविधिलाई अहिलेसम्म नैतिकताको सीमाले संकुचित गरेको मात्रै हो ।

युद्ध र नैतिकता परस्पर विरोधी अवधारणा हुन् तर भ्लादिमिर पुटिन र भ्लोदिमिर जेलिन्स्कीलाई कसले रोक्न सक्यो ? हमास र इजरेल कुन नैतिकताको पाठ पढेर युद्दमा होमिए ? अमेरिका, रूस, बेलायत, फ्रान्स र चीनजस्ता राष्ट्रसंघीय सुरक्षा परिषद्का सदस्य हरूलाई हतियार उत्पादन गर्न कसले रोक्न सकेको छ ? गरिब देशका तानाशाह र आतंककारीलाई यी हतियार खरीद गर्न कसले रोकेको छ ?

अहिलेको समस्या तर क्लोनिङ होइन । संसार कृत्रिम बौद्दिकता अर्थात 'आर्टिफिसियल इन्टेलिजेन्स' को चरणमा प्रवेश गरेको छ । क्लोनिङ्ग प्रविधि घुमाउने टेलिफोनको जस्तो 'अनालग' हो भने आर्टिफिसियल इन्टेलिजेन्स 'डिजिटल' प्रविधिको पनि उच्च विकसित स्वरुप । अहिले यो प्रविधिको सामान्य स्वरुप मात्रै आम जनताको पहुँचमा छ । यसको गुदीको अभ्यास सैन्य उपकरण निर्माता राष्ट्रहरू कसरी गर्दैछन्, त्यसको भेउ आम नागरिकले पाउन बाँकी नै छ ।

सन् ९० को दशकमा छताछुल्ल भएर विश्वका आम नागरिकको पहुँचमा पुगेको 'ईन्टरनेट' प्रविधि संसारका लागि नयाँ सूचना क्रान्ति लिएर आयो । तर अमेरिकी सेनाका लागि यो पुरानो भैसकेको थियो । उनीहरू यसको प्रयोग सन् १९६८ देखि नै गर्दै थिए । यसलाई शुरुमा 'अर्पानेट' नाम दिईएको हो । यसले अमेरिकी सैन्य सूचना गोप्य रुपले एउटा कम्प्युटरबाट अर्को स्थानमा रहेको सैन्य अखडाको कम्प्युटरमा पुर्‍याउन उल्लेख्य भूमिका खेलेको थियो ।

**उनले ट्रम्पलाई वैदेशिक सहायता नरोक्न अनुरोध गरे तर मस्कले ट्रम्पलाई गेट्सको सल्लाह सुन्न दिएनन् । ट्रम्पमाथि गेट्सको जोर चलेन ।**

'बोल्ट बेरानेक एण्ड न्युम्यान इन्क' नामक बोस्टनको एक कम्पनीले अमेरिकी रक्षा मन्त्रालय पेन्टागनका लागि यसको शुरुवात गर्दा माइक्रोसफ्टका जन्मदाता बील गेट्स आठ कक्षामा पढ्ने तेह्र बर्षे किशोर थिए । उनले सात वर्षपछि सन् १९७५ मा माइक्रोसफ्टको आविष्कार गर्दासमेत इन्टरनेटको अवधारणा विकसित भइसकेको थिएन । उनको माइक्रोसफ्ट एक ठाउँको कम्प्युटरमा स्थीर रहेर काम गर्न मिल्ने एक प्राविधिक कार्य पद्दति मात्रै थियो । सन् १९८३ मा अमेरिकी सेनाले 'आर्पानेट' लाई जनता बीच लैजाने अनुमति दिएपछि मात्रै 'ईन्टरनेट' युगको आरम्भ भएको हो । त्यतिबेला यो सेवा प्रदायक एक दर्जन भन्दा बढी कम्पनी अहिले इतिहास भैसके । उनीहरूको नामसमेत सुनिन्न । कम्पनी सकियो, प्रविधि विकासक्रममा छ ।

सन् १९९८ मा ल्यारी पेज र सर्गेई ब्रिनको गुगल बजारमा आएपछि इन्टरनेटको परिभाषा फेरियो । अहिले अमेरिकामा झन्डै १४ सय इन्टरनेट सेवा प्रदायक कम्पनी छन् र यो संख्या हरेक महिना बढ्दो छ तर गुगलको अमेरिकी सैन्य सामग्री उत्पादक कम्पनीहरूसंगको सहकार्यले यसलाई नयाँ उचाईमा मात्र पुर्‍याएन, गुगल इन्टरनेटको पर्यायवाची शब्द बन्न पुग्यो । संसारभरिका इन्टरनेट प्रयोगकर्ताहरू 'ईन्टरनेटमा खोजौं' भन्नुको सट्टा 'गुगल गरौं' भन्न रुचाउँछन् ।

अब जमाना गुगलको मात्रै छैन । इन्टरनेटले खोजेको कुराको सूचना मात्रै दिंदैन । चाहेको कुरा बनाएर प्रस्तुत गरिदिन्छ । कृत्रिम बौद्दिकता अर्थात् 'आर्टिफिसियल इन्टेलिजेन्स'ले मानव जीवनशैलीमा अभूतपूर्व हस्तक्षेप गर्न थालेको छ । संसारभर करिब ७० हजार 'ए आई' कम्पनीहरू प्रविधिको यो दौडमा प्रतिस्पर्धा गर्दैछन् । यसमध्ये १७ हजार पाँच सय वा २५ प्रतिशत 'ए आई' कम्पनी त अमेरिकामा मात्रै छन् ।

अहिले चिनियाँ डिपसिक नामक ए आई कम्पनीले चुनौती दिएको अमेरिकाको सबैभन्दा ठूलो ए आई कम्पनी एन्भिडियाबाहेक एप्पल, बील गेट्सको माइक्रोसफ्ट र गुगलको अल्फाबेट अमेरिकामा अग्रणी हुन् ।

तर वर्तमान राष्ट्रपति डोनाल्ड ट्रम्पका दाहिने हात एलन मस्कको एक्स ए आईसँग बाँकी अन्य प्रतिस्पर्धी झस्किएका छन् । मस्कको हातमा सम्पूर्ण सरकारी गोप्य सूचना छ । उनीसंग अमेरिकी रक्षा मन्त्रालयलाई सल्लाह दिने मात्र होइन, चाहेको कागजात जाँचबुझ गर्नेसमेत हैसियत छ । यस अवस्थामा स्वार्थको द्वन्दको मुद्दा उठ्नु स्वाभाविक हो । गुगलको पेण्टागन र अमेरिकी स्पेस एजेन्सी (नासा) सँग अर्बौं डलरको कारोबार छ । मस्कले चाहेको अवस्थामा यो धरापमा पर्न सक्छ । यही बुझेर हुनुपर्छ, एप्पलले मस्कको कम्पनी स्टार लिंकसँग आफ्ना उपभोक्तालाई निशुल्क इन्टरनेट सुविधा दिने महत्वाकाँक्षी योजनामा सहकार्य गर्ने प्रस्ताव राखेको छ । एन्भिडियासँग मस्कको सम्बन्ध अमिलो थियो, तर अब ऊ मस्कको ए आई कम्पनी एक्स ए आईमा लगानी गर्न राजी भएको छ ।

बिल गेट्स र मस्क दुई विपरीत ध्रुवका व्यक्ति हुन् । मस्क उथलपुथलमा बिश्वास गर्छन् । बिल गेट्स परिस्थितिको गम्भीर विश्लेषण गर्दै बिस्तारै पाइला चाल्ने मान्छे हुन् । डोनाल्ड ट्रम्पले चुनाव जितेपछि गेट्सले नवनिर्वाचित राष्ट्रपतिसँग तीन घण्टा लामो दिवाभोज गरेका थिए । उनले त्यो बेला ट्रम्पलाई बैदेशिक सहायता नरोक्न अनुरोध गरे तर मस्कले ट्रम्पलाई गेट्सको सल्लाह सुन्न दिएनन् । ट्रम्पमाथि गेट्सको जोर चलेन । उनी अझै आफ्नो फाउण्डेसनमार्फत अमेरिकी सरकारसँग मिलेर अफ्रिकामा आफूले गर्दैआएको काम सुचारु राख्न प्रयासरत छन् तर मस्क तगारो भएर उभिएका छन् । गेट्स र मस्कको सम्बन्ध चिसो छ । गेट्स पर्ख र हेरको रणनीतिमा भए पनि 'ए आई' को दौडमा मस्कभन्दा पछाडि परेका छन् ।

मस्क बलिया भएका छन् । राष्ट्रपति डोनाल्ड ट्रम्प उनको दाहिना छन् । उनको शपथ ग्रहणमा मस्कले गरेको नाजी सलामले दुनियाँ झस्किएको छ । मस्क मंगल ग्रहमा मानव बस्ती बसाल्ने सपना देख्दैछन् । जर्मन आप्रवासीका सन्तान डोनाल्ड ट्रम्पमा पनि हिटलरले रुचाएको आर्यन रगत बग्दैछ । प्रविधिको विकासले अब कुनै तानाशाहको प्रतिरुप तयार गर्न क्लोनिङ्ग वा रगत र छालाको आवश्यकता पर्ने युग पुरानो भैसकेको छ । यसको ठाउँ कृत्रिम बौद्धिकताले लिएको छ । आफ्नो एक्स ए आई कम्पनीलाई मस्क सरकारी गोप्य सूचनाको बलमा बजारका अन्य प्रतिस्पर्धीभन्दा छरितो ढंगले अगाडि बढाउने स्थितिमा छन् ।

डोनाल्ड ट्रम्पमा हिटलरको प्रतिविम्ब देखिएको कुरा युरोपका नेताहरू सार्वजनिक रुपमै भन्न थालेका छन् । पैसा र प्रविधिले सम्पन्न मस्क हिटलरका डाक्टर मेंगेलको रुपमा प्रकट भए भने विश्वको शक्ति सन्तुलन कस्तो होला ? यो भविष्यवाणी होइनतर सचेत मनुष्यले वस्तुगत विश्लेषण गर्न सक्छ । डोनाल्ड ट्रम्प, एलन मस्कको सहयात्रा र कृत्रिम बौद्धिकताको बिस्तार जति लामो र फराकिलो हुन्छ, मानव सभ्यता उति नै संकटमा पर्ने निश्चित छ ।

## खड्ग समशेरको जन्मदिन

*महाराज खड्ग समशेर जबराको जन्मदिन भर्खरै सम्पन्न भयो (भर्खरै मात्र हाम्रा प्रिय प्रधानमन्त्री खड्गप्रसाद ओलीको पनि जन्मदिन मनाइएको छ । खड्ग समशेर जबराको जन्मदिन र खड्गप्रसाद ओलीको जन्मदिन एकैदिन पर्न जानुचाहिँ संयोग मात्रै हो) । खड्ग समशेर मान्छे सामान्य नै भए पनि भित्रभित्र बहुतै सामन्ती सोच रहेछ ।*

*आफ्नो जन्मदिनमा प्रजागणले पनि अलिकति मनोरञ्जन गरून्, खड्ग समशेर यही चाहन्थे । त्यसैले आफ्नो जन्मदिनमा एउटा फुटबल प्रतियोगिता आयोजना गरे । यो प्रतियोगिता देखेर कसैलाई उपन्यासकार दौलतविक्रम बिष्टको 'खेल' कथा याद आएको हुनुपर्छ ।*

*खड्ग समशेरका अनुयायीहरू चाहन्थे कि यो जन्मदिनमा हेलिकप्टरबाट पुष्प वर्षा गराऊँ । जस्तो कि पहिला पहिला राजा खलकको जन्मदिनमा गरिन्थ्यो । तर खड्ग समशेर राजा भइहालेका छैनन् । हुने क्रममा मात्रै छन् । त्यसैले हेलिकप्टरबाट होइन हेलिकप्टर जस्तै आकार भएको ड्रोनमार्फत पुष्प बृष्टि गराइयो । ड्रोनमार्फतै भए पनि पुष्प वर्षाका कारण यो जन्मदिन पूरा राजकीय नै देखियो । पहिले पहिले त नेपालकै नक्सा भएको केक काटिन्थ्यो । यस पाली अर्कै वस्तुवाला केक काटियो । जे होस्, यसले पनि जन्मदिन भव्य देखियो । महाराजलाई जन्मदिनको हार्दिक शुभकामना !*

## शहरभित्र

**सिंहराज**

### बेलुनकाण्डको रहस्य

*पोखराको बेलुन काण्डको छानबिनलाई सरकारले तीब्र रुपमा अघि बढाएको छ । यस क्रममा हालै मात्र बेलुनमा हावा भर्ने एक मजदुर पक्राउ परेका छन् । बेलुन काण्डलाई सरकारले अत्यन्त गम्भीर रुपमा लिएको छ । लिनु पनि पर्दछ । किनभने यो काण्डमा परेर देशको अर्थमन्त्री जस्तो व्यक्ति घाइते हुनुभएको छ । यो सानोतिनो कुरा होइन । देशको अर्थतन्त्र त उसै पनि घाइते नै थियो । अब अर्थमन्त्रीसमेत घाइते हुनुभयो । अर्थतन्त्र र अर्थमन्त्री दुवै घाइते हुँदा देशको हालत के हुन्छ ? कसैले सोचेको छ ? त्यसैले पोखराको जो बेलुन काण्ड छ, त्यसको पछाडि देशको अर्थतन्त्रै ध्वस्त बनाउने ठूलो षडयन्त्र लुकेको हुनुपर्छ भन्ने हाम्रो ठहर छ ।*

*यस क्रममा प्रहरीले एक जना बेलुनवालालाई पक्राउ गरेको छ । हामीलाई आशा छ, यो खतरनाक षडयन्त्रको पर्दाफास अब उनै बेलुनवालामार्फत् हुनेछ । बेलुनवाला भारतीय नागरिक हुन् । हामीलाई थाहा भएकै कुरा हो, हाम्रो अर्थतन्त्र ध्वस्त बनाउन भारत पनि लागिपरेको छ । भारतले गरेको नाकाबन्दी नै यसको उदाहरण हो । अब हामीले पत्ता लगाउनुपर्ने छ, पोखरामा उक्त दिन पड्केको बेलुनमा भारतले के घुसाएको थियो ? बेलुन उडाउन त्यसमा ग्यास हाल्नुपर्छ । तर उक्त दिन बेलुनमा उड्ने ग्यासको सट्टा पड्कने ग्यास कसले हाल्यो ? हुन त बेलुनमा हावा मात्रै भरेर पनि फुक्न सकिन्छ । उक्त दिन बेलुनमा हाल्ने हावा साटिएको पो थियो कि ? अब हावै साट्ने भनेपछि यो सानोतिनो कुरा भएन । गम्भीरै कुरा हो । अब बेलुनवालालाई सोध्नुपर्छ- उसले यो हावा कहाँ साँटेर ल्याएको थियो ? घटना हावासँग सम्बन्धित भए पनि अनुसन्धानलाई चाहिँ हावा बनाउनु भएन । है ?*

### गरीबको चमेली...

*– मेयर साब, तपाईंको 'गरिबको चमेली बोल्दिने कोही छैन' भन्ने गीत त फेरि आएछ ।*

*– हो, आउनै पर्‍यो । बिचरा गरीबको लागि बोल्ने त यहाँ कोही पनि छैन ।*

*– तपाईंले बोल्दिए हुन्थ्यो नि । झन तपाईंले त मेयर भइसकेपछि गरीबहरूको उठिबास पो लगाउनुभयो ।*

*– हो त नि । त्यही भएर त गरीबको लागि बोल्ने कोही छैन भनेर फेरि गीत निकालेको मैले ।*

*– मेयर भइसकेपछि तपाईं आफैले बोलिदिए हुन्थ्यो । गीत किन निकाल्नुपर्‍यो ?*

*– मैले बोल्न मिल्दैन । मैले बोलें भने त यो गीतको बोलै नमिल्ने हुन्छ । यसमा बोल्दिने कोही छैन भनिएको छ । मैले बोल्दिएँ भने बोल्दिने कोही त हुने भयो नि ! त्यसैले गीतको कारणले नै मैले बोल्न मिल्दैन ।*

*– बोल्ने ठाउँमा पुगेपछि बोलिदिनु त पर्‍यो नि ।*

*– बोल्न मिल्दैन । मैले बोलें भने गीतको भ्युज घट्छ । आखिर यो मेरो गीत हो, जसरी हुन्छ यसको भ्युज बढाउनै पर्छ ।*

*– मेयर भइसकेर पनि गीतको पछि लाग्ने हो र तपाईं ?*

*– म मेयर भएकै गीतको भ्युज बढाउनलाई हो । त्यसैले गीतको पछि नलागी सुखै छैन । के गर्ने ?*

# सहकारी ठग्ने बितेका बाबु, तिर्नै श्रीमती र सन्तान

अपराधीको मृत्युसँगै अपराध पनि मर्छ भन्ने मान्यता फौज्दारी विधिशास्त्रमा रहेतापनि कुनै व्यक्ति सहकारी ठगी गरेर मर्‍यो भने बिगो के होला भन्ने जिज्ञासा रहिरहनु अस्वाभाविक होइन । ठगी गरेर कुनै व्यक्ति मर्‍यो भने पनि बिगोचाहिँ घरपरिवार, श्रीमति र सम्पत्ति खाने छोराछोरीले ब्यहोर्नुपर्ने सिद्धान्त हालै काठमाण्डौं जिल्ला अदालतले एउटा सहकारी ठगीको मुद्दामा कायम गरेको छ ।

न्यायाधीश सुमनकुमार न्यौपानेको इजलासले क्षेत्रपाटीस्थित हितकारी बहुउद्धेश्यीय सहकारी संस्था लिमिटेडमा भएको करोडौं रकम अपचलनको मुद्दामा ठगी भएको रकम मरिसकेका पूर्व सञ्चालककी श्रीमती र छोराछोरीले ब्यहोर्नुपर्ने गरी फैसला गरेको छ । पाँच वर्ष चलेर जेठ १६ गते आएको फैसलाको पूर्णपाठ हालै सार्वजनिक भएको जानकारी दिँदै सो मुद्दामा सहकारीको तर्फबाट बहस गरेका अधिवक्ता अनन्तराज लुईंटेलले जसले रकम मस्यौट गर्‍यो उसैले तिर्नुपर्ने (डिफल्टर्स निड टु पे) को सिद्धान्त कायम भएको जानकारी दिए ।

सो मुद्दामा सहकारीको तर्फबाट वरिष्ठ अधिवक्ता गोविन्द शर्मा बन्दी, अधिवक्ताहरू लुईंटेल, कृष्ण पोखरेल, विकास भट्टराई, प्रतिभा उप्रेती, विशाल थापालगायतले बहसका क्रममा क्षति गर्नेले क्षति ब्यहोर्नुपर्ने तर्क गरेका थिए । सानुराजा मघैयासमेत करिब सयजनाको जाहेरीले उक्त सहकारीका हालसम्मका सम्पूर्ण सञ्चालक विपक्षी भई चलेको ०७६ सीवान ०३३७ को मुद्दामा अदालतले पूर्व सञ्चालक अध्यक्षहरू स्वर्गीय गौरीप्रसाद श्रेष्ठ र लालबहादुर श्रेष्ठलाई दोषी ठहर गरी उनीहरूकै घरघरानाबाट अपचलन रकम असुलेर डिपोजिटरलाई फिर्ता गराउन आदेश दिएको हो । गौरीप्रसाद श्रेष्ठको मृत्यु भएपश्चात् समेत उनलाई विपक्षी कायम गरी मुद्दा चलाइएको थियो । जिल्ला अदालतको ठगी मुद्दाको ठहर खण्डमा जाहेरवालाको बिगो तीन करोड अठहत्तर लाख बहत्तर हजार चार सय छयान्नब्बे रुपैयाँ बैसठ्ठी पैसा प्रतिवादी लालबहादुर श्रेष्ठ र प्रतिवादी गौरीप्रसाद श्रेष्ठका हकवालाबाट दामासाहीले जाहेरवालाहरूलाई भराईदिने भनिएको छ ।

# शिलान्यास र उद्घाटनको उद्घाटन !

लेखनाथ भण्डारी



**बयान -१**

आगो लाग्न शुरु गरेपछि इनार खन्ने सल्लाह गर्न थाले के हुन्छ ? नेपाली जनबोलीमा यसलाई 'सल्लाह गर्दागर्दै सात गाउँ जले' भनेर कटाक्ष गरिन्छ। आगोले पोल्छ वा दुखाउँछ र पानीले डुबाउँछ वा बगाउँछ भनेर थाहा नपाएको भए त मानिसले आगोमा जलेर वा डुबेर नै ज्यान गुमाउने थिए। प्रश्न गर्न सकिन्छ, यो थाहा पाएर पनि मानिसको जीवन अमर नै त कहाँ भएको छ र ? आगो र पानी मानिसको जीवनका दैन्नदिन अनिवार्य स्रोत हुन् तर यी स्रोत जति उपयोगी छन्, त्यति नै जोखिमपूर्ण पनि।

उद्घाटन अर्थमा र सन्देशमा फरक बुझिने शब्द हो। उद्घाटन, कुनै पनि प्रश्नको जानकारी दिनु, अज्ञात रहेको वा रहस्यमा रहेको विषयको खुलासा/पर्दाफास हुनु उद्घाटन हुनु वा गर्नु हो। उद्घाटनको यो सन्दर्भ समाज विकास निर्माणका कामहरूको प्रगति र प्रयोगका लागि गरिने औपचारिक गतिविधि हो। सामाजिक नै मात्र किन व्यक्तिगत जीवनका गतिविधिको पनि उद्घाटन हुन र गर्न सकिन्छ। खाना खानुको पहिलो गाँस होस् वा कफी र ह्विस्कीको पहिलो चुस्की पनि यसको उद्घाटन हो। यी काम हामी हरेक साँझ बिहान गर्छौं। अरू पनि धेरै उदाहरण दिन-लिन र बुझ्न हामी स्वतन्त्र छौं। कोही व्यक्ति जुनदिन जन्मँदैछ, त्यो उसको जीवनको उद्घाटन हो। यी भए कुरा र कुलोको कुरा, जता लगे पनि भयो ! अब लागौं शिलान्यास वा उद्घाटनतर्फ, जुन हामी किन गर्छौं र कसरी गर्छौं ?

**बयान -२**

पोखरा पर्यटन महोत्सवको उद्घाटनका क्रममा उपप्रधानमन्त्री विष्णु पौडेल र पोखरा महानगरपालिकाका मेयर धनराज आचार्य दुर्घटनामा परेर घाइते हुनुभयो। सन्दर्भ दुःखद हो, यस्तो हुनुहुन्नथ्यो। तर यो पाठ सिक्न र सच्याउन सकिने उदाहरण हो। गत हप्ता यता राजधानीमा घाइतेहरूको अवस्था अवलोकन गरेर फर्कनु भएका प्रधानमन्त्री केपी ओली उता दाङमा एक वर्ष पहिले नै सञ्चालनमा आएको एमाले नेतृको होटल-रिसोर्टको रिवन काट्दै हुनहुन्थ्यो। पार्टीका नेता र कार्यकर्ताको क्याटेगोरीमा 'आइते-ल्याइते'हरूको बा'ले अलिक धेरै ख्याल गर्नुहुन्छ भन्ने गुनासो सुनिन्छ। गृहमन्त्री रमेश लेखक पनि हेटौंडामा व्यापार तथा निर्माण सम्बन्धित अर्को महोत्सव उद्घाटन गर्दै हुनुहुन्थ्यो गत हप्ता।

उदघाटनका अनेक अन्तर्य हुनसक्छन्। ती स्वाभाविक र सामान्यदेखि स्वार्थ समूहका सेटिङ र सिन्डिकेट हुने गर्छन्। विशेषतः नेताहरू र तिनका कार्यकर्ताको उद्देश्य शिलालेख लेखाउन सस्तो प्रचार गर्ने र आफ्ना प्रगति विवरण देखाउने, चुनावी मुद्दा बनाएर मतदाता आकर्षित गर्ने हुन्। प्रधानमन्त्री ओलीले सिंहदरवारको कन्ट्रोल रुममा बसेर देशैभरि पालिकास्तरका स्वास्थ्य चौकी र सडकहरूको शिलान्यास गर्नु भएको थियो। ती सडक तथा स्वास्थ्य चौकी कहिले, कसरी र कसले बनाउने हो यकिन छैन। शिलालेखमा नाम लेखाउने यो शिलान्यासको अन्तरसम्बन्ध कहाँ छ भनेर बुझ्न सकिन्छ।

महाभूकम्पले ढलेको धरहरा ४० प्रतिशत निर्माण कार्य बाँकी हुँदै ओलीले नै उद्घाटन गर्नुभएको थियो। मेलम्ची खानेपानी सम्भवतः राष्ट्रपति, प्रधानमन्त्री, मन्त्रीलगायतले सबैभन्दा धेरैपटक उद्घाटन गरेको योजना हो। पत्रकार रविन्द्र घिमिरेले अनलाइन खबरमा लेखेका छन्- 'प्रधानमन्त्री ओलीले पद धरापमा परेपछि काम नसकिएका यी परियोजनाहरू उद्घाटन गरेका थिए।' मेलम्ची र धरहरा उद्घाटनपछिको निर्माणमा २ अर्बभन्दा धेरै बजेट खर्च हुन बाँकी थियो। त्यो रकम पूर्वनिर्धारित बजेटभन्दा कम खर्चमा निर्माण सम्पन्न भएर बाँकी भएको होइन। स्मरणीय छ, ११ वैशाख २०७८ मा तत्कालीन प्रधानमन्त्री ओलीले तामझामसाथ उद्घाटन गरेको धरहरा निर्माण तीन वर्ष बित्दा पनि पूरा हुन सकेको थिएन। निर्माण कार्य सुचारू राख्न उद्घाटनका क्रममा प्रधानमन्त्री ओलीको नाम लेखिएको शिलालेख केही महिना झिकेर स्टोरमा थन्काउनु परेको थियो।

**बयान- ३**

यस्तो लाग्छ, हाम्रा नेता र सरकारका प्रतिनिधिहरू हातमा कैंची, गोजीमा रिबन र झोलामा खादा बोकेर हिँड्नुहुन्छ। यस्तो एउटा दृश्य थियो, प्रतिनिधिसभाको कुनै नियमित कार्यविधिको परिणाम सुनाउँदा केही महिला माननीयले झोलाबाट खादा झिकेर एक अर्काको गलामा झुण्ड्याइदिँदै हुनुहुन्थ्यो। माननीयज्यूहरूको पोल्टाका यी खादा-माला सुरक्षा मापदण्डभित्रकै वस्तु होलान् तर निर्धारित कार्यक्रम बाहिरका हुन्। निर्धारित कार्यक्रम बाहिरका गतिविधिहरू सुरक्षा मापदण्डका निम्ति चुनौती हुन्।

केही वर्ष पहिले तत्कालिन प्रधानमन्त्रीका रूपमा प्रचण्ड भन्दै हुनुहुन्थ्यो- 'मन त मान्दै मान्दैन तर शिलान्यास र उद्घघाटनका कार्यक्रमा नगई हुँदैन।' प्रचण्डले आफूलाई संसदमा निर्वाचित गरेको गोरखा राज्यका विस्तारवादी राजाको गृहभूमिमा के कति शिलान्यास र उद्घाटन गरिसक्नुभयो, ती सूचना एकीकृत हुँदै होलान्। प्रचण्ड यसै महिनाको पहिलो हप्ता गुल्मीमा व्यस्त हुनुहुन्थ्यो, कारण थियो- मन नमाने पनि ज्यान पुऱ्याउनैपर्ने बाध्यता। उहाँले हेलिप्याड, पिस पार्क, प्रशासकीय भवन, शहीद पार्क आदिको शिलान्यास र उद्घाटन गर्नुभयो। यस मामलामा एकाघरका भएर शेरबहादुर देउवा धेरै भाग्यमानी हुनुहुन्छ। त्यो भाग्य हो, परराष्ट्रमन्त्री आरजु राणाको संघीय सांसदमा टिके होइन जनताको मतबाट निर्वाचित हुने रहर ! टिके भन्नेहरूलाई देखाउनै पर्ने बाध्यता छ उहाँलाई।

**प्रम ओलीले यस्ता धेरै रेकर्ड राख्नुभएको छ, तीमध्ये अभिलेखीकरण हुन बाँकी छ- 'पृथ्वीनारायण शाहले शुरु गरेर तिनका भाइ भारदारले थपघट र गडबड गर्दै थाती रहेको नेपाल एकीकरणको अधुरो कामलाई पूर्णता दिने प्रधानमन्त्री ओली हुनुहुन्छ !'**

उपप्रधानमन्त्री राणा गत माघ महिनाको अन्तिम साता धनगढीमा निक्कै व्यस्त हुनुभयो। प्रम प्रचण्ड उता र राणा यता भइदिएको भए पुर्खाको नासोको नाता पनि रहने थियो तर त्यो मिलेन। राणाले धनगढी आसपासमा पक्की-झोलुङ्गे पुल, विद्यालयका नवनिर्मित भवन, प्रशासकीय भवन आदीको आधा दर्जन शिलान्यास र उद्घाटन गर्नु भयो। राणा यति सक्रिय नभइदिने हो भने यो सबै अभिभारा देउवाको काँधमा आइलाग्थ्यो। उस्तै परे प्रम ओलीले सिंहदरवारकै कन्ट्रोल रुमबाट बटम थिचिदिन सक्नु सक्थ्यो ! यो लैला मजुनको उदाहरणीय जोडी राजा र रैतीको नमुना प्रेम हो !

उद्घाटन र शिलान्यासको विकृति र विवाद कतिसम्म छ भने केन्द्रीय सरकारको नेतृत्वमा रहेकाहरूले सरकारी बजेटमा नै विशेष गरी सेनाका वायुयान प्रयोग गर्छन्। संघीय वा प्रदेश सांसदहरूले सम्बन्धित योजनाहरूकै खर्च कटाएर वा स्थानीय निकायहरूको बजेटमा यात्रा गर्छन्। सरकारले अध्यादेशमार्फत् जारी गरेका केही ऐनको सर्वत्र विरोध भइरहेकै छ र ती अध्यादेश संसदले पास गर्ने यकिन नहुँदै केही मन्त्री र अध्यादेशले समेटेका निकायका प्रमुखहरूले अध्यादेशको व्यवस्थामा टेकेर उदघाटन र शिलान्यास गरिसके। यो नगरे हुन्थ्यो तर त्यो पर्दैन भन्दैन ऐनले !

७७ वटै जिल्लाका सबै पालिकामा शिलान्यास वा उद्घाटनको रेकर्ड राखिसक्नु भएका ओलीले गत मंसिरमा उद्घाटन गर्नुभएको झापाको दमकको 'बहुमुखी टावर'को नक्सा नगरपालिकाबाट पास गरिएकै छैन। यसो त प्रम ओलीका भागमा विधिकै विधान यस्तो छ, सातपटक प्रधानमन्त्री हुने भाग्य भएका शेरबहादुर देउवाले भाग्यमा लेखिएको त्यो अवसर गुमाउन सक्ने खतरा छ तर ओलीले शिलान्यास भएको करिब ५१ वर्षपछि २०७५ मा झापाको भद्रपुरस्थित मेची पुलको उद्घाटन गर्ने मौका पाउनुभयो। वि.सं २००९ सालको आसपासबाट यो पुल निर्माणका लागि प्रयास हुन थालेको थियो। तत्कालीन अञ्चलाधीश मनमोहन मिश्रले २०२४, तत्कालीन प्रधानमन्त्री लोकेन्द्रबहादुर चन्दले २०४१ र तत्कालीन उपप्रधानमन्त्री विजयकुमार गच्छदारले २०६६ मा सो पुलको शिलान्यास गर्नुभएको थियो। यस्तो रेकर्डको संयोग अरूलाई नमिल्न सक्छ। प्रम ओलीले यस्ता धेरै रेकर्ड राख्नुभएको छ, तीमध्ये अभिलेखीकरण हुन बाँकी छ- 'पृथ्वीनारायण शाहले शुरु गरेर तिनका भाइ भारदारले थपघट र गडबड गर्दै थाती रहेको नेपाल एकीकरणको अधुरो कामलाई पूर्णता दिने प्रधानमन्त्री ओली हुनुहुन्छ !' सिंहदरवारको आइटी कन्ट्रोल रुममा चुच्चे नक्साको अनावरण गर्नुभएका ओलीले त्यस भूगोलको प्रवेश मार्गको सडकको शिलान्यास कन्ट्रोल रुमबाट गरिसक्नुभएको छ। सम्भवतः सडक उद्घाटन गर्ने अवसर त्यही भूगोलका दुःख-सुखका 'यार' देउवालाई दिनुहुनेछ ! राणाले देउवालाई साह्रो गाह्रोमा भोलि पनि सघाउनु नै हुन्छ।

**बयान - ४**

उद्घाटन नामको यो दौड र मोह शक्तिको आडमा कीर्ति कायम गर्ने र शिलालेख लेखाउने महत्वाकांक्षाको 'प्रेतात्मा' हो। आफूसँग सम्बन्ध नै नभएका धर्तीका सबै इँटामा नाम कुँदाएर बाँकी सबैलाई गिज्याउने 'अहम्'को भूत सवार हो। देशको विद्यमान शासन प्रणाली र संरचना अर्थात् संघीय लोकतान्त्रिक गणतन्त्रमा नवराजाको अभ्यास हो। संघीयताको अभ्यास, स्थानीयताको अधिकारलाई केन्द्रीय सत्ताको गोजीमा खाँदेर वडास्तरका विकाश निर्माणका इँटामा नाम कुदाउने रहर आत्मरतिको असाध्य रोग हो। यस रोगका सम्बन्धमा विकास विज्ञ सूर्यराज आचार्यले लेख्नुभएको छ- सरकारी संरचना/भवनको उद्घाटन गर्दा उद्घाटन गर्नेको नाम लेख्न नपाउने आदेशका लागि अदालतमा रिट हाल्न मिल्दैन ? यो राज्यको कुन कार्यविधिमा तोकिएको छ ? कति केसमा शिलालेखमा नाम भएका नेता जेल पुगेका छन् ! नाम लेख्न नपाउन् भन्ने 'सानो' आदेश आउँदा यसले ठूलो काम गर्थ्यो।' यसको उपचार गर्न ढिला भइसकेको छ।

नेपाली राजनीति र सामाजिक जीवनको नेतृत्वमा रहेकाहरूलाई नियतीले अरुको खेताला बनाएर यति धेरै नचाइरहेको छ कि मानौं उनीहरू बँधुवा मजदुर हुन्। मन नलागेर भयो र ? त्यो अभिनय गर्न निर्देशकले तिनलाई नै खटाइरहेको छ। नाईं भन्न उनीहरू कसरी सक्छन् ? नेताहरूले यी नाटक नगरे न कसैले आहा बा, दाजु, दिदी, म्याडम, कमरेड वा सर नमस्कार, लाल सलाम, जय नेपाल नै भन्थे न जनताले भोट दिन नै योग्य ठान्थे ! दृष्टान्तहरूले देखाउँछ, नेपाली समाजको सत्ता र शक्ति केन्द्रित राजनीतिमा शिलान्यास र उद्घाटन कतिपय सन्दर्भमा 'गर्नेलाई भन्दा देख्नेलाई लाज'को विषय भएको छ। जनबोलि यस्तो पनि छ - 'फोहोर गरेपछि दैलो देखेर गर्नु के ?' फोहोर गर्नु पहिले दैलो देखेको जाति !

# संघीयताको ढाड सेक्ने तयारी

'नाच सुन्दरी' भन्दै मदारीले बाँदर नचाएजस्तै निजामती प्रशासनले प्रहरी प्रशासनलाई रिंगाउने तयारीस्वरुप प्रहरी ऐन २०८१ ल्याइएको दाबी सुरक्षासम्बन्धी विज्ञहरूले गरेका छन्। सेवा सुविधाका सर्त र व्यवस्थाहरू, वृत्तिविकास, सरुवा र निवृत्तिभरणलाई व्यवस्थित गर्नका लागि ऐन बनाउनै पर्ने हो। तर, यहाँ त प्रहरीको कार्य सम्पादन मूल्यांकन विभागका साथै सिडिओ र गृह सचिवले पनि गर्ने भनिएको छ। यस्तो नीति संसारमै कहीँ, कतै छैन। एउटा प्रहरीले सबैको कमाण्ड मान्न खोज्दा भद्रगोल हुने खतरा छ। जहाँजहाँबाट कार्य सम्पादन हुन्छ, जवानदेखि अफिसरसम्मलाई तिनैप्रति नम्र वा आज्ञाकारी बन्नुपर्ने बाध्यता रहन्छ। यस्तो व्यवस्थामा आफ्नै बर्दीधारी हाकिमप्रति बफादार हुने कि कासमू फाराम भर्ने सिडिओ अथवा गृहसचिव वा महाशाखा प्रमुखको चाकरीमा धाइरहने भन्ने समस्या खडा हुनसक्छ। गृह मन्त्रालयले गठन गर्ने विशेष अदालतमा एक जना शाखा अधिकृतले उजुर हालिदियो भने खरिदार, सुब्बा र फाँटको अधिकृतसामु आइजीपीले धाउनुपर्ने खतरा देखिँदैछ। यस्तो प्रावधान प्रस्तावित प्रहरी विधेयकमा देखेपछि धेरैजसो भूपू आइजिपीहरूले गहृमन्त्री रमेश लेखकको नाम 'लेखक' किन राखियो होला भन्ने जिज्ञाशा पोख्न थालेका छन्।

ऐनमा नेपाल प्रहरीले गर्ने काम सशस्त्र प्रहरीलाई दिइएको र सशस्त्र प्रहरीको काम नेपाल प्रहरीमा ल्याएर डुप्लिकेशन गरिएको गुनासो पनि छ। दुई संगठनबीच कार्यक्षेत्र र कार्यअधिकारको डुप्लिकेशन हुँदा दुवै संगठनहरू असफल हुने जोखिम रहन्छ। दुवै संगठनबीच सुमधुर सम्बन्ध पनि रहन्न। सिडिओले एउटाले नगरे अर्कोलाई अह्राउने जुन प्रावधान राखिएको छ, यसले घातक नै अवस्था सिर्जना गर्ने विज्ञहरूको दावी छ।

ऐनमा बढुवाको स्पष्ट प्रावधान छैन। सेनामा सेनापतिले भावी सेनापतिलाई एक महिनाअघि सिफारिस गर्ने, सिकाउने र एक महिनाअघि नैं विदामा बस्दै सहज र सुव्यवस्थित तवरले नेतृत्व हस्तान्तरण गर्ने चलन छ। यसो गर्दा नयाँ चिफले एक महिनामा नयाँ योजना तयार गर्ने, आफ्नो टिम बनाउने, त्यसलाई कार्यान्वयनमा ल्याउन नयाँ रणनीति अपनाउने समय पाउँछ तर प्रहरीलाई भने कार्यगत स्वायत्तता दिनुपर्ने आवाज उठे पनि आन्तरिक व्यवस्थापकीय स्वायत्ततासमेत नदिइएको अवस्था छ। पानी, चामल अड्कलेर हाल्ने, मनका कुरा थपथाप गर्ने अनि तैंले भातचैं मीठो पकाउनुपर्छ भन्ने किसिमले ऐन ल्याइएको गुनासो सुनिन्छ। अहिले पनि प्रहरी प्रमुखको सिफारिस सामान्यतया एक महिना अगाडि गरिने छ भन्ने जस्ता काइतेभाषा राखिएको छ। ३० दिनअघि सिफारिस गर्नुपर्नेछ भनेर उल्लेख गर्न किन नसक्ने ? जति दिन अघि गरे पनि तत्कालको सरकारले नै गर्ने हो। यो प्रावधानबाट सरकार आफैंले गर्ने कामप्रति पनि विश्वस्त नभएको प्रष्ट हुन्छ।

विधेयकमा प्रहरी र सशस्त्रतर्फ सेवा, समूह, उपसमूहको स्पष्ट किटानसहित कार्यविभाजन र जिम्मेवारी उल्लेख हुनुपर्थ्यो। तर मन लागी सेवा समूह सिर्जना गर्न त्यस्तो व्यवस्थालाई समेत बाइपास गरिएको पाइएको छ। मन्त्रालयले प्रहरीबाट लिएको सुझावउपर छलफल चलाउनुपर्थ्यो, निचोडमा पुगेपछि त्यसैअनुरुप ऐन बनाउनुपर्थ्यो। प्रस्तावित विधेयकले पेन्सनको भार बढ्ने अवस्था एकातिर छ भने अर्कोतर्फ प्रहरीप्रतिको घट्दो क्रेजलाई रोक्न सक्ने अवस्था पनि देखिन्न। यो ऐनलाई सामान्य संशोधन गरी यस्तै हालतमा पारित गर्ने हो भने गृहमन्त्री लेखकले पनि चिरञ्जीवीकुमार वाग्लेले जस्तै दशा व्यहोर्ने दिन नआउला भन्न सकिन्न किनभने प्रहरीलाई ऐनकानुनले भन्दा जो गृहमन्त्री वा गृहसचिव हुन्छ उसैले निर्देशित गर्छ। तिनले जसलाई पक्डेर ले भन्छ, छोड् भन्छ त्यसै गर्ने बाध्यता हुन्छ। आइजीपीले कसैलाई सरुवा वा बढुवा गर्ने अधिकार पनि मौजुदा ऐनमा व्यवस्था गरिएको छैन। त्यस्तो अधिकार गृह मन्त्रालय आफैंले राखेको छ।

संघीय प्रहरी ऐन पारित हुनेवित्तिकै संविधानअनुसार सातै प्रदेश प्रहरी ऐन गरी ८ वटा ऐन लागू हुने अवस्था छ। यस्तो बेला संघीय प्रहरी ऐनलाई कसरी प्रभावकारी बनाउने भन्ने विषयमा समेत प्रस्तावित ऐनले दूरदृष्टि राख्न सकेको पाइन्न। प्रदेश प्रहरीसँग साधनस्रोत छैन, भवन छैन, भनेजस्ता हतियार छैन। प्रदेश प्रहरीलाई परिचालन गर्ने स्वायत्त र न्यायिक व्यवस्था पनि छैन, जसले गर्दा स्वार्थी प्रहरीको झुण्ड तयार गर्दै विरोधीको ढाड सेक्ने फौज तयार पार्ने जोखिम रहन्छ। संघीयतालाई असफल बनाउनका लागि प्रहरी ऐन सबैभन्दा उपयुक्त माध्यम हुने केही विज्ञहरूको ठहर छ।

# ज्वाइँ हुनुको काइदा, अझै मिल्ला त फाइदा ?

गत हप्ता वरियता मिचेर बढुवा गरिएकाहरूले सशस्त्र प्रहरीको नेतृत्व लिने सम्भावना कम मात्र देखिएको छ। यसरी डिआइजी हुनेमा पूर्वप्रधानमन्त्री तथा नेपाली काँग्रेसका सभापति शेरबहादुर देउवाको भतिजज्वाइँ दीपेन्द्र कुँवर छन्। वरियताअनुसार कृष्णराज पाठक र पहिलो ब्याचका मनीष थापाको बढुवा हुनुपर्ने थियो। तर यी दुवैलाई पाखा लगाउँदै कुँवर र सुदूरपश्चिमकै भट्टले बाजी मारेपछि वर्तमान सरकारको चर्को आलोचना भएको छ।

स्रोतका अनुसार पेलपाल गरेर डिआइजीमा पदोन्नती भए पनि पावर, पहुँच तथा अन्य कुनै खेल नभएको अवस्थामा आइजीपी हुन सक्ने अवस्था भने कुँवर र थापाको छैन। वैशाख महिनामा एआइजी सिपी गौतम भूपू भएपछि रिक्त पदमा गणेश ठाडा मगर र कमल गिरीमध्ये एक जना एआइजी हुनेछन्। विवादै विवादबीच प्रस्तावित सशस्त्र प्रहरी ऐन लागू हुनेवित्तिकै आइजीपी राजु अर्यालको पनि पदावधि समाप्त हुन्छ। त्यस स्थानमा नारायणदत्त पौडेल र वंशी दाहालमध्येबाट एक जना जानेछन्। जसको कार्यकाल तीन वर्षको हुनेछ। त्यसपछि ठाडा वा गिरीमध्ये एक जना लाइनमा चढ्नेछन्। यिनले तीन वर्ष कमाण्ड लिएको अवस्थामा अहिले बढुवा भएका डिआइजीहरूको चार वर्षे अवधि पूरा भइसकेको हुनेछ। तिनको कार्य अवधिबीच ६ वर्षमा दुई नयाँ आइजीपी हुनेछन्। वरिष्ठ डिआइजी दीपक अधिकारी, डिआइजी अन्जनी पोखेल र सुरेश श्रेष्ठको पनि सम्भावना छ। त्यसपछि कुमार न्यौपाने, कालिदास धौबजी, लक्ष्मण सिंहमध्येबाट एआइजी हुनेछन्। यसमा अरुभन्दा एक वर्ष पहिला फुली थापेका कारण एआइजीपीमा दीपक अधिकारीमात्रै एक्ला दावेदार रहनेछन्। कुँवरहरू डिआइजीबाटै घरतिर लाग्नेछन्। तर, थप दरबन्दी र पदावधि थपलगायतका अनेक दाउपेच चलेको अवस्थामा भने केही भन्न सकिन्न। शेरबहादुर देउवा सत्तामा रहिरहे भने कुँवरको छिर्के दाउ नचल्ला भन्न सकिन्न।

त्यसो त डिआइजी किशोर प्रधानले पनि एआइजीको दरबन्दी थप्न निकै पहलकदमी लिएका थिए तर असफल भएपछि माघ २० गतेदेखि घर गए। दिपेन्द्र कुँवरले चाहिँ प्रवन्ध महाशाखामा तीन वर्ष अड्डा जमाए।

# राम्रा कामको थालनी गर्न केले रोकेको छ र !



सुरेन्द्र नेपाल श्रेष्ठ

गत तीन वर्षमा करिब १५० वटा लेख लेखिएछ। विषयवस्तुलाई वर्गीकरण गर्दा ६ वटा पुस्तक तयार हुनसक्ने सामग्री जम्मा भइसकेको अवस्था छ। सन् २०२२ को फेब्रुअरीदेखि थालनी गरेको, प्रत्येक महिनासम्बन्धी लेखहरू सन् २०२३ को जनवरीसम्म नै चल्यो। यसमै बेलायतमा एक वर्षका पाँच खबरहरू पनि संलग्न गर्न सकियो। गैरआवासीय आन्दोलनसम्बन्धी लेखहरूलाई 'देशबाहिरको नेपाल' भनेको छु। बेलायतमा देखिएका विषयसम्बन्धी लेखसंग्रहलाई 'बेलायती केही व्यवस्था र अवस्था', केही देशको जानकारीसहितका लेखहरूलाई 'यताउताका कुरा', नेपालको समसामयिक विषयमा लेखिएका सामग्रीलाई पहिलो लेख संग्रहलाई नै निरन्तरता दिएर 'नेपाल : बेलायतबाट नियाल्दा-२', नाम चलेका देशी विदेशीहरूको सामान्य परिचय अनि उनीहरूले भोगेका जीवनलाई भने 'केही कथा व्यथा' नामकरण गरेको छु। यी सृजना कुनै दिन सार्वजनिक हुने सम्भावना छ।

आजकल दैनिक ५ समाचार पोष्ट गर्न छाडेपछि खासै रेडियो, टिभी अनि पत्रपत्रिका हेर्ने गरिँदैन। चुनावपछि आएका नयाँ लेबोर प्रधानमन्त्री तथा अन्य मन्त्रीले के कसो गर्दैछन्, त्यसबारे पनि त्यति जानकारी छैन। आक्कलझुक्कल समाचार सुन्दा सरकारले अपेक्षा गरेअनुसार काम गर्न नसकेको चाहिँ अड्कल काट्न सकिन्छ। यस प्रसंगमा केही समयअगाडि पिएचडी गरेका मित्रसँग कुरा हुँदा नेपालमा अहिले प्रधानमन्त्री को छ ? केपी ओली हैन ? भनेको प्रसंग याद आयो। त्यतिबेला शेरबहादुर देउवा प्रधानमन्त्री भइसक्नुभएको थियो। यस्तो समाचार पनि कसरी थाहा नभएको होला ? त्यो पनि डाक्टर भइसकेको साथीलाई। अस्ति भर्खर नजिकको नाता पर्ने, जोसँग बेलाबखत बालेन र रविबारे कुरा हुँदा निकै ठाकठुक पर्छ, सँग कुरा गर्दा तपाईंको प्रचण्डले गर्ला नि भन्थे, उनको पद नै गइसक्यो भनेको त हो र कहिले ? अहिले को छ प्रधानमन्त्री भनेर प्रतिप्रश्न गरेका थिए। राजनीतिमा यति चाख राख्ने भएर पनि आफ्नो देशमा को प्रधानमन्त्री छन् भनेर एक महिनासम्म थाहा नपाउनु अचम्म लाग्ने विषय थियो। आफूलाई पसल आउजाउ गर्न त फुर्सद छैन, कसले हेर्छ समाचार भन्ने जवाफ आयो। म चुप बसें।

पत्रपत्रिकाबारे ओशोले बडो कडा टिप्पणी गरेको पाइन्छ। अहिले बजारमा आउने पत्रपत्रिकामा अधिकांश खबर नकारात्मक खालका हुन्छन्। काटमार, हिंसा, दंगा, फसाद, हत्या, बलात्कारका कुराले प्रायः पाना भरिएको हुन्छ। बिहान उठ्नेबित्तिकै यस्तो खबर पढ्नु भनेको मस्तिष्कलाई विष पिलाउनु हो। यसले मानिसलाई आतंकित र कमजोर बनाउने गर्दछ। त्यसैले उनी सकारात्मक भाव आउने खालका पुस्तक अध्ययन गर्न वा त्यस्तो समय अन्य कुनै फलदायी काममा लगाउन सुझाव दिन्छन्।

त्यसो त पत्रपत्रिकामा सकारात्मक हुन्न भन्ने पनि हैन, विदेशबाट आएर उद्योग सञ्चालन गर्नेहरूका खबर पनि छापिने गरेका छन्। ठूला मिडिया हाउसले समाजलाई दिग्भ्रमित पार्ने प्रवृत्ति अविकसित वा विकासोन्मुख देशमा मात्र होइन, सम्पन्न र विकसित देशहरूमा पनि प्रशस्तै छन्। त्यसैले प्रख्यात भाषाशास्त्री, दर्शनशास्त्री तथा राजनीतिक विश्लेषक नोम चोम्स्कीले त्यस्तोलाई प्रोपोगण्डा मोडेल नाम दिएको हुनुपर्छ। मैले 'मेरो आधा शताब्दी' मा संलग्न गरेका ५० वटा शीर्षकका सबै लेख हातैले लेखेको हुँ। त्यसमा नअटाएका केही लेख अझै कतै प्रकाशित भएका छैनन्। लेख्न थालेपछि खासै केरमेट नगर्ने अनि एकपटक लेखेपछि दोहोऱ्याएर नपढ्ने बानीका कारण मेरा प्रकाशित दुई पुस्तकमा प्रशस्त कमी कमजोरी भएका छन्। नेपालका प्रायः सबै अनलाइन पत्रपत्रिकामा मेरा लेखहरू प्रकाशित छन्। केही समयदेखि भने प्रायःजसो जनआस्था साप्ताहिकमा नै लेख्ने गरेको छु।

बेलायत आएको धेरै समयपछाडि मात्र नेपाली सन्देशको थालनीसँगै लेख्ने बानी बसेको हो। प्रायःजसो नेपालको राजनीतिक उतारचढावमा आधारित लेखबाट नै यात्रा शुरु भयो। गैरआवासीय अभियानमा जोडिएपछि त्यस विषयमा धेरै कलम चल्यो। जीवनी लेख्न शुरु गर्दा तीनमध्ये एक कपी हराएपछि सिलसिलेवार लेख्न छोडेर घटनामा केन्द्रित भइयो। कुन विषयमा लेख्ने भन्ने प्राथमिकता पनि पटक-पटक फेरबदल भइरहेका छन्। कोभिडताका घरभित्र मात्र बसिरहन पर्ने, यताउता जान नमिल्ने हुँदा भर्चुअल होलिडे भन्दै थुप्रै देशबारे युट्युबमा हेरियो र विशेषतः युद्धपीडित देशहरूबारे प्रशस्त लेखियो। अन्य देशबाट सिक्न सकिने थुप्रै शिक्षा भेटिए। अरुलाई बाँड्नका लागि ती मेरा लेखका विषयवस्तु बने। अचेलचाहिँ आफू बसेको देशभित्र प्रचलित केही कानुनी विषयबारे अलि बढी ध्यान खिचिरहेको छु। अहिले सफल, सम्पन्न र विकसित देखिएका देश २०० वर्षअगाडिसम्म के कस्तो अवस्थामा थिए, त्यसमा के कस्ता प्रयासले यो सफलता दिलाए, त्यसका लागि विकसित कानुनहरूको के कस्तो भूमिका रह्यो भन्ने विषयवस्तु चाखलाग्दा भेटिन्छन्।

प्रत्येक पुस्ताले क्रम दुःख गर्दै जानुपरेको इतिहास साक्षी छ। विकासको पहुँच सबैतिर एकैपटक समान ढंगले विस्तार भएका छैनन्। सूचना तथा प्रविधिको कारण अहिले विकसित भनेर चिनिने देशका नागरिकले जति अविकसित वा पिछडिएको भनिएका देशका नागरिकले दुःख गर्न आवश्यक छैन। गरिब देशका नेताहरूले वास्तवमा त्यहाँका नागरिकहरूको हितलाई केन्द्रमा राखेर निस्वार्थ काम गर्ने हो भने लामो समय लगानी नगरिकनै देशको काँचुली फेर्न सम्भव छ।संसारभर छरिएका कलम चलाउन सक्ने नागरिकहरूले यसबारे अलि दायित्वबोध गरी विभिन्न क्षेत्रमा के कसरी योगदान पुऱ्याउन सकिन्छ त्यहीअनुसारको सिर्जना गर्न सकियो भने सबैको हितमा थोरै भए पनि टेवा पुग्नेछ।

# नेताका बिहेको चर्चा, कहाँबाट हाल्छन् खर्च ?

एमालेनिकट विद्यार्थी संगठनमा पछिल्लो समय उपाध्यक्षद्वय गोविन्द गिरी र धर्म गिरीको बिहेले बजार तातेको छ। मानिसले बिहे गर्नु नौलो र अचम्म होइन। तर यहाँ आश्चर्य मान्नुपर्ने किसिमको बिहे छ। प्युठान घर भएका अखिल उपाध्यक्ष धर्म गिरी र केन्द्रीय सदस्य ई. रचना सापकोटाले गत साता (फागुन ८ गते) पार्टी केन्द्रीय कार्यालय च्यासलमा अध्यक्ष तथा प्रम केपी ओलीलाई साक्षी राख्दै प्रगतिशील बिहे गरेका छन्। उता, बैतडी घर भएका उपाध्यक्ष गोविन्द गिरीले भने गत मंसिरमा (८ गते) कञ्चनपुरमा बिहे गरेका छन्। उतै गाउँमा समेत भोज दिएपछि महाभोज चाँहि मंसिर १५ गते साँझ काठमाण्डौंको बौद्धस्थित बौद्ध हेरिटेजमा कक्टेलसहितको गरेका छन्। उक्त पार्टी प्यालेसमा युवा संघ उपाध्यक्ष अमित लामाको समेत लगानी रहेको खुल्न आएको छ।

धर्मको बिहेमा सामान्य खाजा र चिया थियो भने गोविन्दको बिहेमा ८४ व्यञ्जन। धर्मको बिहे पुग नपुग ३ लाखमा सकियो, गोबिन्दले भोजमा नै लगभग २० लाख कटाए। धर्मले सामान्य किसिमको निम्ता कार्ड छापेका थिए, नेपाली भाषामा। गोविन्दद्वारा अंग्रेजी भाषामा महँगो कार्ड बाँडिएको थियो। धर्मले नेता-कार्यकर्ता, आफन्त तथा साथीभाइलाई बोलाए। गोविन्दले निजामती कर्मचारी र ब्यापारीहरूलाई समेत निम्त्याए। गोविन्दले सुनमा समेत धेरै लगानी गरेको देखियो। विद्यार्थी आन्दोलनमा लागेका, देखिने पेशा-व्यवसाय केही नभएकाको बिहेमा यत्रो तामझम गर्ने खर्च कसरी आयो होला भन्दै, एमालेका एक स्थायी कमिटी सदस्यले जिब्रो टोके।

धर्म अलिअलि ब्यवसाय गर्दै अखिलको राजनीति गर्ने कमर्स क्याम्पस मीनभवनका उत्पादन हुन् भने गोविन्दचाहिँ उद्योगमन्त्री दामोदर भण्डारीको पीए छन्। नवलपरासीस्थित देवचुली डिस्ट्रिलरीमा मदिराको स्तरोन्नति गर्दा १५ लाख उठाउने उनी सिटिईभिटीका उत्पादन हुन्। केपी ओली गत असारको अन्तिममा प्रम भएपछि, अखिलले सामुहिक भेट्ने भन्दै बधाईसहितको सम्मान पत्र तयार गऱ्यो। तर केपीले अखिल आफ्नो पक्षमा अरिङ्गाल नबनेको भन्दै सामुहिक भेट दिएनन्। उक्त पत्र अहिले कता छ कसैलाई थाहा छैन।

समिक बडाल अनेरास्ववियुको अध्यक्षमा निर्वाचित भएदेखि नै शैक्षिक सुधारको लागि भन्दै बोर्ड अफ ट्रस्ट्रीको कुरा उठाउँदै आएका थिए। ५/६ महिनायता सो विषयवस्तु उठ्न छाडेको छ। केही समयअघि अखिलका पदाधिकारीको जम्बो टोली बालकोट पुगेको थियो। विषय थियो- विद्यार्थी महोत्सवको उद्घाटन। त्यहीबेला नै हो केपीले साप्तो लिएको। त्यसपछि बोर्ड अफ ट्रस्ट्रीको कुरा बीचैमा हरायो। विद्यार्थी महोत्सवमा ओली गएनन्। अन्तिम दिन गएर १/२ घण्टा फर्किए। ओलीले उक्त कार्यक्रममा शंकर पोखरेललाई पठाएर उद्घाटन गर्न लगाएका थिए।

यसैबीच गिरीले प्युठान नारिकोटस्थित श्री अमृत जीवन माध्यमिक विद्यालयमा रु १ लाख ११ हजार १ सय ११ रुपैयाँको अक्षयकोष स्थापना गरेका छन्। उक्त कोषबाट प्रत्येक वर्ष गरिब तथा जेहेन्दार विद्यार्थीलाई छात्रवृत्ति दिने योजना छ।

## विश्वको सेरोफेरो



राजेन्द्र स्थापित

# महान् बन्न कहाँ सजिलो छ र मान्छेलाई

मोनालिसा विश्वकै सबैभन्दा लोकप्रिय र प्रसिद्ध चित्रकला भएकोमा आजसम्म कसैले बिमति जनाएको छैन । चित्रकार लियोनार्दो दा भिन्चीले कोरेको यो चित्र किन यतिधेरै प्रसिद्ध भयो, कलाकारले यो कसको परिकल्पनामा कोर्न थालेका होलान् जस्ता यावत विषय भने आजपर्यन्त रहस्यको गर्भमै छ । भिन्चीले यो चित्र कोर्ने काम सन् १५०३ मा शुरु गरेको त सबैले मानेका छन् तर सकियो कहिले भन्नेबारे बहस छ, कसैले ४ वर्ष लगाएर तयार पारेको भन्ने गरेका छन् त कसैले १४ वर्ष । जे होस् सन् १५१८ सम्ममा यो तयार भइसकेको मान्नुपर्ने हुन्छ, किनभने यसैवर्ष फ्रान्सका तात्कालीन राजा फ्रान्सिस (प्रथम) ले भिन्चीबाट यो चित्र किनेको बताइन्छ । सन् १५१९ मा त उनको निधन नै भइसकेको थियो । त्यसो त यो चित्र भिन्चीले आफू जिवित हुन्जेल कसैलाई नबेची आफ्नै घरको भित्तामा झुण्ड्याउने गरेको, उनले यो चित्र अपुरो छाडेको र पछि शिष्यहरूले बल्ल पूरा गरेको दाबी गर्नेको पनि कमी छैन । यी सबै कुरा यसकारणले पनि रहस्यमय बन्न पुग्यो किनभने भिन्ची आफैं सिद्धहस्त लेखक थिए यसको बाबजुद आफ्नो लेखनमा यो चित्रबारे कहीं कतै उल्लेख गरेनन् । उनीद्वारा लिखित पुस्तक 'कोडेक्स् लैसेस्टर' को पाण्डुलिपि माइक्रोसफ्टका मालिक बिल गेट्सले सन् १९९४ मा ३ करोड १० हजार डलर तिरेर किनेका थिए ।



मोनालिसा इटलीको फ्लोरेन्स निवासी रेशम व्यापारी फ्रान्सिस्को डि बार्तोलोमेयो डेल गिओकोन्डोकी पत्नी लिसा डेल गिओकोन्डो हुन् भन्ने धेरैको मत छ । उनको बिहे सानै उमेरमा पाको उमेरका फ्रान्सिस्कोसित भएको थियो । ती व्यापारीले पत्नीको जन्मदिनमा उपहार दिन सो चित्र भिन्चीलाई तयार गर्न लगाएको मानिन्छ । यो चित्र लिसाकै हो भन्नेहरूका अनुसार त्यसबेला उनी ६ सन्तानको आमा बनिसकेकी थिइन्, जबकि चित्र कोर्न थाल्दा उनी मात्र २४ वर्षकी थिइन् । १५ वर्षको कलिलो उमेरमै बिहे गरेकी उनी फ्रान्सिस्कोकी दोश्री पत्नी थिइन् । चित्र कोर्न लगाउँदा गर्भवती थिइन्, त्यसैले उनको शरीरमा कुनै गहना छैन, हातमा औंठीसम्म पनि छैन । अमेरिकी येल युनिभर्सिटीको शरीर संरचना विभागका प्रोफेसर शेर्विन न्युल्यान्डका अनुसार गर्भावस्थाको कारण शरीर सुन्निन सक्ने भएकाले गहना उतारेर राखिदिएको हुनुपर्छ । नत्र धनी स्त्रीको शरीरमा गहना नहुने कुरै हुँदैन । शेर्विनको यो पनि दावी छ कि गर्भावस्थाको कारण नै मोनालिसाको दुवै हात र अनुहार सुन्निएको चित्रमा स्पष्ट देख्न सकिन्छ । उनले आफ्नो दुवै हात यसरी राखेकी छन् कि जसबाट गर्भावस्थामा बढेको पेटको आकार नदेखियोस् । यथार्थमा भिन्चीले यो चित्रको शीर्षक राखेका थिए- मोन्ना लिसा । यसको अर्थ इटालियन भाषामा 'मेरी मेडम लिसा' हुन्छ । तर पछि सबैले मोनालिसा उच्चारण गर्न थाले । यो चित्र कुनै स्त्रीको नभई चित्रकार भिन्चीको आफ्नै आत्मचित्र हो भन्ने मत पनि छ । यसो भन्नेहरूका अनुसार भिन्चीले आफू स्त्री भएको भए कस्तो देखिने रहेछु भन्ने कल्पना गरेर तयार पारेका हुन् ।

उता जर्मन कलासम्बन्धी इतिहासकार सुश्री माइक बोग्ट-लयरेसनका अनुसार चित्रमा देखिएकी महिला इटलीको अरांगो प्रान्तका ड्युककी पत्नी इशाबेल हुन् । इशाबेलको मुखमा दुःख यसकारणले झल्किएको छ किनकि भिन्चीले उक्त चित्र कोर्नु केही समयअघि मात्र उनकी आमाको निधन भएको थियो । उनका अनुसार लोग्नेले मदिरा पिएर उनीमाथि कुटपिट गर्थे । आफ्नो पुस्तक 'हु इज मोनालिसा' मा उनले भिन्ची त्यसबेला ड्युकको दरबारमा शाही कलाकारको रुपमा कार्यरत भएको र इशाबेलसित नजिकको सम्बन्ध रहेको उल्लेख गरेकी छन् । त्यसरी नै ८ वर्षअघि एकजना जापानी दन्त चिकित्सकले मोनालिसाको मुस्कानको रहस्य अगाडिका दुइटा दाँत भाँचिएको र त्यसैले माथिल्लो ओंठ एकतर्फ अलिकति दबिएको जस्तो देखिएको उल्लेख गरेका थिए । झट्ट हेर्दा मोनालिसा मुसुक्क हाँसिराखेको देखिने तर यथार्थमा त्यो मुस्कान नभई भाँचिएको दाँतको कारण रिक्त स्थानलाई लुकाउन माथिल्लो ओठलाई घचेट्ने प्रयास हो भन्ने उनको दाबी छ ।

यो चित्र यतिधेरै किन प्रसिद्ध भयो भन्नेमा पनि सबैको मत समान देखिंदैन तर धेरैको भनाइअनुसार यो चित्र महिलाको मन्द हाँसोले यसलाई प्रसिद्धिमा पुऱ्याएको हो । चित्रको विशेषता पनि यही हो कि फरकफरक कोणबाट नियाल्दा भिन्न मुस्कान देखिन्छ । झट्ट हेर्दा धेरै हाँसेको र हेर्दै जाँदा हाँसो कम हुनुका साथै अन्त्यमा हाँसो नै देखिन्न । भिन्ची सबैभन्दा बढी ओंठमा केन्द्रित हुने गरेका थिए, जसको कारण मुस्कानयुक्त ओंठ बनाउन मात्र १२ वर्ष लगाए । तर, हार्वर्ड विश्वविद्यालयका न्युरोलोजिस्ट डा. मार्गरेटले सन् २००० मा गरेको शोधपछि भनेकी छन्- मोनालिसाको मुस्कान फेरिंदैन, यो स्थिर नै छ, यो चित्र यसरी बनेको छ कि हेर्नेले जस्तो हेराइ खोजेको छ त्यस्तै देखिन्छ । यो चित्रको विशेषता नै यही हो । विश्वप्रसिद्ध यो चित्र आकारमा ठूलो पनि छैन, ३० इन्च लम्बाइ र २१ इन्च चौडाइको छ । भनिन्छ यसमा भिन्चीले ३० भन्दा बढी पत्र रंग हालेका छन् त्यसैले यति सानो चित्रकला पनि ८ किलो गह्रुँगो हुन पुग्यो । फेरि यो चित्र उनले कागजमा कोरेको नभई काठको बोर्डमा बनाएका हुन् ।

यो चित्र आफैंमा रहस्यपूर्ण त छ नै झन् सन् १९११ मा पेरिसको संग्रहालयबाट चोरी भएपछि यसको प्रसिद्धिले आकाश छुन पुग्यो । शुरुमा चोरीको आरोप अर्का विश्व प्रसिद्ध स्पेनिस चित्रकार पाब्लो पिकासोमाथि लाग्यो । त्यसबेला पिकासो पेरिसमै थिए । कुनै बेला नेपोलियन बोनापार्टले आफ्नो शयनकक्षको भित्तोमा झुण्ड्याएको यो चित्रकला सन् १७९७ देखि लुभ्रे संग्रहालयमा राख्ने गरिएको हो । कलाकृति हराएको खबरले ठूलो स्थान पायो । प्रायः सबै अखबारले मोनलिसाको तस्बिरसहितको समाचार छापे । नागरिक मोनालिसा राखिएको खालि भित्ता हेर्न तँछाडमछाड गर्दै संग्रहालय पुग्न थाले । भीड यति बढ्यो कि सरकारलाई अरु कलाकृति हराउने डर भयो, नतिजा, संग्रहालय नै बन्द गर्न आदेश दिइयो । अनुसन्धानकै क्रममा पिकासोसँग पनि सोधपुछ गरियो तर चोर संग्रहालयकै एक कर्मचारी विन्सेन्जो पेरुगिया निस्किए । उनले उक्त चित्रकारिता निकै मन पराएको र त्यसलाई चित्रकार भिन्चीको देश इटलीमै लान खोजेको बयान दिए । ३२ वर्षीय उनले ६ महिनाको सजायँ पाए । इटलीले भने उनलाई सच्चा देशभक्त घोषणा गऱ्यो । हराएको २ वर्षपछि भेट्टाइएको उक्त कलाकृति पेरिस ल्याइपुऱ्याएपछि मोनालिसाको चर्चा एकाएक चुलियो । त्यसपछि उक्त कलाकृति हेर्न वर्षौं लाखौं मानिस लुभ्रे संग्रहालय् पुग्न थाले । यसको प्रसिद्धिको अनुमान यसरी पनि लगाउन मिल्छ, लुभ्रे संग्रहालयमा गत वर्ष ८७ लाख र सन् २०२३ मा ८९ लाख प्रवेश गर्दा तीमध्येका ८० प्रतिशत मोनालिसाको तस्बिर अवलोकन गर्न मात्र पुगेका थिए । मोनालिसाको चित्रकला बिक्रीका लागि राखिएको छैन तर पनि यसको मूल्य साढे २ अर्ब डलर अनुमान गरिएको छ ।

यो चित्रलाई लोकप्रिय बनाउनमा अरु घट्ना पनि जिम्मेवार छन् जस्तो एकजना फ्रान्सिसी कलाकार लुक मास्पेरोले सन् १८५२ को जुन २३ मा पेरिसको एउटा होटलको छतबाट हाम्फालेर आत्महत्या गरे । सुसाइड नोटमा लेखिएको थियो- म मोनालिसाको प्रेममा पागल भइसकें । यतिमात्र होइन, संग्रहालयमा मोनालिसाको चित्रमुनि कैयौं प्रेमपत्र र गुलाफको फूल राखिएको हुन्छ । सबै पत्र मोनालिसाकै नाउँमा हुन्छ । त्यसबाहेक कैयौं पटक यो चित्रकला बिगार्ने कोसिस गरिएको खबर पनि निस्किरहन्छ । कसैले मसी छ्यापेको हुन्छ भने कसैले चक्कु प्रहार गरेको, एकजनाले ढुंगाले हानेको, अर्कोले एसिड र अर्कोले लाठी फालेको । यो चित्रकला कति धेरै बहुमूल्य छ भने दोश्रो विश्वयुद्धताका यसलाई ६ स्थानमा सारिएको थियो ताकि यो कृति जर्मनहरूको हातमा नपरोस् ।

लियोनार्दो दा भिन्ची एक महान चित्रकार मात्र थिएनन्, वैज्ञानिक, गणितज्ञ, वास्तुकार, मूर्तिकार, अन्वेषक, इञ्जिनियर, लेखक र दक्ष मेकानिस्ट पनि थिए, हार्मोनियम बजाउँथे । साथै शरीर रचना, भूगर्भ शास्त्र, खगोल विज्ञान, वनस्पति विज्ञान, इतिहास विषयमा पनि राम्रो जानकार थिए । कैंचीको आविस्कार उनैले गरेका हुन् । उनले १६ औं शताब्दीमै प्यारासुट, हेलिकप्टर, हवाइजहाज र टैंकको डिजाइन तयार पारिसकेका थिए । जुन पछिका वैज्ञानिकहरूलाई काम लाग्यो । कोही एकजना व्यक्तिमा यति धेरै विषयको ज्ञान विरलै हुन्छ । त्यसैले उनलाई इतिहासकै महान व्यक्ति भन्ने गरिएको छ । यसबाहेक उनी दुवै हातले लेख्न सक्थे, एकैपटक एउटा हातले लेख्ने र अर्को हातले चित्र कोर्न सक्थे । उल्टोबाट पनि सजिलै अक्षर लेख्थे, उनको यो लेखाइ पढ्नु परे ऐनाको सहयोग नलिई सुख हुन्नथ्यो । गोप्य राख्न चाहेको कुरो उनी यसरी लेख्थे । जबकि उनले स्कुलमा कहिल्यै पाइलासम्म टेकेका थिएनन् । यसबाहेक उनले हतियार, युद्धमा प्रयोग हुने वाहनको स्केच, शहरको नक्सांकन त्यतिबेलै बनाएका थिए । सन् १५१९ मा निधन हुँदा ६७ वर्षका थिए । मोनालिसाबाहेक उनका प्रमुख कृतिमा भर्जिन अफ रक्स, लेडी विद एन एर्मिन, भर्च्युभियन म्यान र लास्ट सुपर आदि छन् ।

## 'नक्कली' कागज, 'सक्कली' नागरिक

चिनियाँ मूलका नागरिकसहित विभिन्न मुलुकका व्यक्तिहरूलाई सुन तस्करी अभियानमा सहयोग पुऱ्याउने उद्देश्यले काभ्रेपलाञ्चोक जिल्लाबाट कर्मचारीहरूको संलग्नतामा बिक्री भएका नागरिकताबारे छानबिन अझै सकिएको छैन । करिब ४ सय बढी नागरिकता बिक्री भएको प्रारम्भिक अनुसन्धान छ । कर्मचारीहरू पटक-पटक जेल बस्ने क्रम जारी छ तर सुब्बा हुँदा नागरिकता बिक्रीको हैसियत बनाउँदै अकुत कमाएका अधिकृतविरुद्ध छानबिन नै भएको छैन । नागरिकतामा हस्ताक्षर गर्ने एक जना अधिकृत भने एक वर्षमा तीन पटक जेल बसेर धरौटीमा छुटेका छन् । यसैबीच जिल्ला प्रशासन कार्यालय, काभ्रेपलाञ्चोकले नमोबुद्ध नगरपालिका ११ बस्ने २४ वर्षीया अनिशा लामाले झुट्टा विवरण पेश गरी नागरिकता, राष्ट्रिय परिचयपत्र र राहदानी बनाएको अभियोगमा मुद्दा लगेको छ । २०७९ माघ १५ गते नमोबुद्ध नगरपालिका वडा नम्बर ११ को कार्यालयबाट सिफारिस लिएर नागरिकता बनाएकी थिइन् । बाबुको नाम फरक परेको भन्दै नयाँ जन्मदर्ता बनाएर अर्को नामबाट नागरिकता लिन लागेपछि अनिशाविरुद्ध मुद्दा दायर गरिएको हो । वडा अध्यक्ष बृष्णबहादुर तामाङ, वडा सचिव शंकरप्रसाद भट्टराई लगायतले उनले झुटो विवरण पेश गरेको जानकारी नभएको बयान दिएका छन् ।

त्यस्तै बनेपा नगरपालिका वडा नम्बर १४ साँगा बस्ने ३७ वर्षीया सविता मगर र ४५ वर्षीय विष्णुप्रकाश थापा मगरले झुट्टा विवरण पेश गरी नागरिकता लिएको अभियोगमा प्रशासनले सरकारी वकिल कार्यालयमार्फत अदालतमा दर्ता गरेको छ । सविताले काठमाडौं जिल्लाबाट पहिलो नागरिकता लिएकी थिइन् भने दोश्रो नागरिकता काभ्रे जिल्ला प्रशासन कार्यालयबाट लिएकी हुन् । २०५९ सालमा उनीहरूले दोहोरो नागरिकता बनाएका थिए । अहिले परिचयपत्र खिच्ने क्रममा उक्त कुरा खुलासा भएको हो । दिनदिनै नागरिकता लिने क्रममा झुट्टा विवरण पेश गर्ने क्रम बढेको छ । अर्कोतिर प्रविधिमैत्री प्रशासन हुन लागेपछि पहिले-पहिले कीर्ते गरेको समेत अहिले खुल्न थालेको छ । *- मोतीराम तिमल्सिना*

## कसको खल्ती भर्न बन्दैछ यो पुल ?

स्थानीयको आवश्यकता र जनप्रतिनिधिको माग बिना नै बुटवल उपमहानगरपालिका वार्ड नं. १२ र १५ बीच तिनाउ नदीमाथि झोलुङ्गे पुल निर्माण गर्न लागिएको छ । लुम्बिनी प्रदेशको योजना आयोगबाट बहुबर्षीय रुपमा स्वीकृत भएको झोलुङ्गे पुल निर्माण हुने ठाउँभन्दा पूर्वतिर ७ सय मिटरमा र पश्चिमतिर ५ सय मिटरमा पक्की मोटरेबल पुल रहेका छन् । तर केही जग्गा ब्यापारीको स्वार्थका लागि बन्न लागेको पुल एउटा विद्यालय देखाएर सडक मापदण्ड बिपरित निर्माण सम्झौता भएको हो । जक्सन निर्माण सेवा एण्ड सप्लायर्स प्रा.लि. रुकुम सिस्नेले १ करोड ७७ लाख रुपैयाँमा बनाउने जिम्मा पाएको छ । लुम्बिनी प्रदेशको भौतिक पूर्वाधार सडक डिभिजन कार्यालयले पुलसम्बन्धि सरकारी निर्देशिकाबिपरित टेण्डर सम्झौता गरिसकेको छ । स्थानीयले माग गरेका कारण योजना परेको र पुल निर्माणको सम्झौता भएको कार्यालयका वरिष्ठ इञ्जिनियर लालु गिरीले बताए । कार्यविधिअनुसार पुल रहेको एक किलोमिटर दूरीभित्र अन्य कुनै पनि पुल निर्माण गर्न पाइँदैन । मापदण्डविपरित बनाउन लागिएको झोलुङ्गे पुल प्रस्तावित तिनाउ-दानव कोरिडोरमा पर्दछ । कोरिडोर सडक बनेपछि बन्न लागेको झोलुङ्गे पुल खोलामै पर्ने भएकाले प्रयोगमा आउने कुनै संभावना पनि देखिँदैन । कोरिडोर सडक निर्माण भएपछि झोलुङ्गे पुल भत्काउनु पर्ने हुन्छ ।

उक्त क्षेत्रबाट प्रदेशसभा सदस्य तुल्सी चौधरी आवश्यकताभन्दा पनि पहुँचका भरमा पुल बन्न लागेको बताउँछन् । बजेट छुट्टिएको छ भन्ने थाहा पाएर टेण्डर निकाल्नुअघि नै आफूले खबरदारी गरेको जानकारी दिँदै चौधरी भन्छन्- 'खोइ, कसरी बन्न लाग्यो थाहा भएन, हामीले त सचेत गराएकै हो । खेलोमेलो बुझ्न सकिएन ।' अर्का प्रदेश सभा सदस्य भोजप्रसाद श्रेष्ठ कोरिडोर सडक बन्दा भत्काउनु पर्ने झोलुङ्गे पुल खोइ कसरी बन्न लागेको हो थाहा नभएको बताउँछन् । पाँच सात सय मीटरमा दुवैतिर पुल हुँदाहुँदै पनि बन्न लागेको झोलुङ्गे पुल रातो किताबमा राखेअनुसार त्रुटीपूर्ण रहेको श्रेष्ठले दावी गरे । प्रदेशमा बजेट नभएर धेरै महत्वपूर्ण योजना अघि बढ्न सकेका छैनन् । तर यसरी बजेटको दुरुपयोग हुनु लाजमर्दो कुरा हो । आवश्यकता नभएकै कारण गत असारमा सम्झौता भएर पनि अहिलेसम्म निर्माण कार्य शुरु हुन सकेको छैन । श्रोतका अनुसार मापदण्डबिपरित बनाउन लागिएको झोलुङ्गे पुलको बिषयमा अख्तियारमा उजुरी समेत परेको छ ।

## पद छाड्न पर्दा उहाँलाई साह्रै पीडा

सत्ता हस्तान्तरण गर्ने समय नेटोकाटेको अनुमानका बीच सुदूरपश्चिमका मुख्यमन्त्री कमलबहादुर शाह र मुख्यमन्त्रीका दावेदार प्रकाशबहादुर देउवाबीच विवाद चर्किएको अनुमान लगाउन थालिएको छ । गत साता कञ्चनपुरमा आयोजित एक कार्यक्रममा मुख्यमन्त्री शाहले आफूसंग असहमत मन्त्री, राज्यमन्त्रीले राजीनामा गरे हुन्छ मात्र भनेनन् त्यस्ता कर्मचारीले पनि सरुवा लिएर जाँदा हुन्छ भनेका थिए । यो कुराले काँग्रेस संसदीय दलका नेता मुख्यमन्त्री शाह र कांग्रेस संसदीय दलमा बहुमत रहेको भनिएका देउवाबीच चर्को विवाद भएको चर्चा चल्न थालेको छ । सरकारी कार्यक्रममा पत्रकार नबोलाएरै मुख्यमन्त्रीले बोलेको सो कुरा सरकारी मुखपत्र गोरखापत्र दैनिकमै छापिएपछि नेताबीच विवाद छ भन्ने चर्चा सर्वत्र चल्न थालेको हो । खासगरेर प्रकाश निकट सामाजिक विकासमन्त्री मेघराज खड्का, राज्यमन्त्री सरस्वती खड्का र आर्थिक मामिला राज्यमन्त्री प्रकाश बमले सहयोग नगरेपछि मुख्यमन्त्रीले राजीनामा र सरुवाको कुरा कोट्याएका हुन ।

प्रकाश मुख्यमन्त्री शाहको पहिलो कार्यकालको १४ महिनासंगै सरकारमा थिए । सम्बन्ध निक्कै गहिरो थियो । जव वाम गठवन्धन भएर समाजवादीका दीर्घबहादुर सोडारी ४ महिना मुख्यमन्त्री भए । त्यसपछि कांग्रेसले मुख्यमन्त्री पाउने र शाहले नै प्रकाशलाई सहयोग गर्ने बचन दिएको चर्चा चल्यो । तर शाहले अन्तिम अवस्थामा दलको नेता छोड्न मानेनन् । यसो हुनुमा प्रकाशकी सहोदर काकी शेरबहादुर देउवा पत्नी आरजु राणा देउवा आफै मन्त्री हुने अवस्था आउनु र एनपी साउदले समेत प्रकाशविरुद्ध खेल खेल्नु रहेको बताइन्छ । यति हुँदाहुँदै पनि दशैंपछि शाहले सत्ता हस्तान्तरण गर्ने सहमति भएको बताइन्छ तर सात महिना पुग्दा पनि छोड्न नमान्दा दरार आएको चर्चा छ । मन्त्रिमण्डल गठन गर्दा मुख्यमन्त्री शाह छलफल गर्न प्रकाश देउवाको निवासमै गएका थिए तर एक घण्टा कुराइयो ।

## पाठक-पत्र

## जनताका छोरा जिउँदै मर्ने जर्सा'ब ?

काठमाडौं महानगरपालिका-२२, न्यूरोडस्थित व्यापारिक भवन ठेक्कामा लिने कम्पनीमाथि नेपाली सेनाले साह्रै अन्याय गरेको गुनासो छ । अर्बौं लगानी गरिसकेपछि सेनाले ठेकेदार कम्पनीलाई 'निल्नु न ओकल्नु' बनाएको छ । पीडित ठेकेदार न्याय माग्दै अदालतको शरणमा पुगेका छन् । एक शताब्दी पुरानो भवन भत्काउन नमिल्ने व्यवस्थाका बाबजुद सेनाले जबरजस्ती भवन भत्कायो । तर, अस्पताल बनाउने भनिएकोमा सेना एकाएक 'प्लान चेञ्ज' गरेर १४ तले आधुनिक व्यापारिक भवन निर्माण गर्नतर्फ लाग्यो । भूकम्पपछि भवनको तला घटाएर १० तला कायम गरियो । भवन निर्माणमा सैनिक कल्याणकारी कोषको दुई अर्ब रुपैयाँ बराबर खर्च भएको छ । हालसम्म सो भवनको नक्सा पाससमेत नगरिएको बुझिएको छ । काठमाडौं महानगरपालिकाले भवनको नक्सा पासका लागि पटकपटक पत्राचार गरिसकेको छ ।

कूल तीन लाख १५ हजार वर्गफिटमध्ये करिब ३० हजार वर्गफिट क्षेत्रफल अस्पताललाई दिइने र बाँकी दुई लाख ८५ हजार वर्गफिट १५ वर्षका लागि भाडामा लिने सहमति भएको थियो । भवन बाहिरबाट निर्माण सम्पन्न भएपनि भित्र पुरै भद्रगोल थियो । ढलान मात्र गरिएको भवनमा शौचालयको समेत निर्माण भएको थिएन । लिफ्ट, इमर्जेन्सी भऱ्याङ, आगो निभाउने उपकरणलगायत अत्याबश्यक संरचना पनि थिएन । ठेकेदार पक्षले अपूर्ण अवस्थामा भवनको ठेक्का लिएको हो । त्यहाँको भौतिक संरचना निर्माण, सौन्दर्यकरण, विद्युत सप्लाईलगायतका काममा ठेकेदारले अर्बौं रुपैयाँ सकाएको । तर, अझैसम्म पनि निर्माण सम्पन्न भइनसकेको अवस्था छ । ठेकेदार पक्षले भवनभित्र निर्माण शुरु गर्न नपाउँदै कोरोना महामारीले सतायो । लकडाउनका कारण उनीहरूले काम गर्न सकेनन् । २०७७ भदौबाट आंशिक रुपमा लकडाउन त खुल्यो तर नक्सापासको विवादले लफडा सिर्जना भयो । स-साना काम अगाडि बढेको मात्र थियो, नक्सापास नहुँदा अवरुद्ध हुन पुग्यो । सेनाले कुनै निर्माण गर्नु-नगराउनु भनी २०७७ मंसिर १६ गते पत्र पठायो ।

त्यसपछि कम्पनी अलपत्र परेको हो । एकातिर काम हुन सकेन, अर्कोतिर भाडा पाकिरहेको छ । बल्लतल्ल दुवै पक्षको सहमतिमा भवन हस्तान्तरण कार्यदल गठन भयो र काम थालियो । आधारभूत काम सकेर भुइँ तलाका पसल सञ्चालनमा ल्याइयो । तर, कम्पनीमाथि फेरि अर्को बज्रपात आइलाग्यो । व्यापारीहरूले पूर्ण निर्माण नभएसम्म भाडा नतिर्ने अडान लिए । त्यसैबीच २०७८ वैशाख १६ गतेदेखि दोस्रो चरणको लकडाउन भयो । पसल पूर्ण रुपमा बन्द भयो । २०७७ माघदेखि भाडा लागू भएकोमा व्यापारीहरूले कोरोनाको कारण देखाउँदै भाडा तिर्न नसकिने बताए । २०७८ असार १ गतेदेखिको मात्र भाडा तिर्न उनीहरू सहमत भए । अर्कोतर्फ कोषले भाडाका लागि निरन्तर ताकेता गरिरहेको थियो । कम्पनीले भने मुख्य सम्झौतामा संशोधनको माग जारी राखेको थियो । जुन कोषले मानिरहेको थिएन । सरकारले कोरोनाकालमा घरभाडामा ५० प्रतिशत छुट दिन निर्देशन दिएको थियो । सोहीअनुरुप ठेकेदारले पनि सेनासँग भाडा छुट माग्यो । शुरुवातमा सेनाले सकारात्मकता देखाएको कम्पनीको भनाइ छ । तर, छुट नदिएपछि कम्पनीले २०७९ असारसम्मको भाडाबापत २६ करोड रुपैयाँ बुझायो ।

जबकि, कम्पनीले भाडाबापत १०-१२ करोड र पार्किङ्गबापत दुई करोड रुपैयाँ उठाएको थियो । बहुराष्ट्रिय कम्पनीहरूले सटर भाडामा लिने टुंगो भएपछि कम्पनीले निर्माणको गतिलाई तीव्रता दियो । केही समयमै आन्तरिक भागको निर्माण सकिने देखिएको थियो । तर, कम्पनीलाई पहिलो गाँसमै ढुंगाझैं भइदियो । सेनाले बहालवाला र भूपू कर्मचारी खटाएर पसलबाट भाडा उठाउन थाल्यो । भाडामा सेनाको ठाडो हस्तक्षेप भएपछि कम्पनी चरम मारमा पर्ने नै भयो । सेनाले जबरजस्ती भाडा संकलन गरेर त्यहाँ भएको कम्पनीको भौतिक संरचना कब्जा गऱ्यो । यता, कम्पनीले पनि सम्झौताबमोजिम कम्पनीलाई प्राइम बैंकको ग्यारेन्टी नविकरण गरी पेश गरिसकेको थियो । उता, कल्याणकारी कोषले एकतर्फी रुपमा करार भंग गरेको सार्वजनिक सूचना निकालेको छ । जसले कम्पनीलाई मात्र नभई त्यहाँ पसल चलाई बसेका पसलेलाई समेत तनाव भएको छ । उनीहरू पसल छोड्ने कि राख्ने भनी दोधारमा परेका छन् । काठमाडौं जिल्ला अदालतको निषेधाज्ञाका बाबजुद सेनाले लकडाउनको रकम दाबी गरेको कम्पनीको भनाइ छ ।

सेना र व्यापारीबाट चेपुवामा परेको कम्पनीको सम्पत्ति लिलाम गरेर कल्याणकारी कोषमा रकम जम्मा गर्ने भनी बैंकले ताकेता गरेको गऱ्यै छ । कम्पनी बैंकको निर्णयविरुद्ध काठमाडौं जिल्ला अदालत पुगेको थियो । तर, अदालतले दावी नपुग्ने फैसला गरेपछि कम्पनीले उच्च अदालत, पाटन गुहारेको छ । उक्त भवनको ठेक्का आफूनिकट ब्यापारीलाई दिनको लागि कल्याणकारी कोषका वर्तमान निर्देशक सहायक रथी प्रकाश थापाको चलखेल शुरु भइसकेको छ । एकाध वर्षमा अवकाशमा जान लागेका उनी अहिलेका ठेकेदारलाई निश्कासन गर्न जोडका साथ लागिपरेका छन् । उनले भवन ठेक्कामा लिन व्यापारीहरूलाई खुल्ला प्रस्ताव गर्दै हिँडेका छन् । भवनबाट उठाएको रकम अपचलन भएको देखिएपछि सेनाले उत्तम सापकोटा कर्सा'बको नेतृत्वमा कोर्ट अफ इन्क्वायरी गठन गरेको छ । उक्त कमिटीले तत्कालीन आवास तथा बीमा शाखामा कार्यरत सेनानी समिर गुरुङ्ग, प्यूठ टिकाराम गोतामे र जमदार रविन्द्र लुङ्गेलीमाथि छानबिन अघि बढाएको छ ।

समिरले त्यहाँको भाडा उठाउने गर्दथें । हाल उनी भागेर बेलायत पुगेका छन् । उनीहरूमाथि भाडाको रकम जम्मा गरेर पार्किङ्ग शुल्क अपचलन गरेको आरोप छ । रकम अपचलनबारे धेरै नै गुनासो आएपछि सेनाले सहायक रथी लवकुमार रायमाझीलाई अनुसन्धानका लागि त्यहाँ पठाएको थियो । उनी पनि असुलीधन्दामा लिप्त रहेको व्यापारीहरूको आरोप छ । त्यहाँ व्यापार गर्ने वातावरण नभएपछि व्यापारीहरूले धमाधम पसल छोड्न थालेका छन् । कोषका कर्मचारीले आफूखुशी सटर भाडामा लगाइरहेका छन् । अभिलेखीकरण नगरिकन भाडा उठाएर खाइरहेका छन् ।

यता, करार भंग गर्दा सेनालाई ठूलो नोक्सानी भइरहेको छ । मासिक चार करोड ११ लाख ११ हजार १११ रुपैयाँ उठिरहेकोमा हाल सेनाले एक करोड ५० लाख रुपैयाँको हाराहारीमा मात्र प्राप्त गरिरहेको छ । कोषलाई घाटा गराएर केही सैनिक अधिकृतआफूलाई अदृश्य आम्दानीको स्रोत बनाएको प्रंष्टै छ।

*- रमेश लाफा मगर*

## 'म एकदम दुःखी छु'

जनआस्था साप्ताहिक र जनआस्था डट कमको मिति २०८१ माघ ३० को वर्ष ३० अंक ४६ 'सर्वेन्द्र खनाल र नवराज सिलवालको यो सट्याकसुटुक' शीर्षकमा प्रकाशित समाचारप्रति ध्यानाकर्षण भएको छ । मैले राजनीतिको माध्यमबाट देशे सेवा गर्ने जुन दिन निर्णय लिएँ, त्यसैदिन सर्वाधिक भरोसा राख्ने नेकपा (एमाले) लाई रोजें । एमालेको विचार, दर्शन, सिद्धान्त, नीति र कार्यक्रमप्रति निष्ठा र प्रतिवद्धता सदा अटल रही आएको छ । मेरो पार्टीले अवलम्बन गरेको बहुदलीय जनवादको मार्गदर्शन नै सबैभन्दा उपयुक्त छ भन्ने विश्वास छ ।

आमनेपाली जनतालाई समेत एमालेको विकल्प सोच्नु या खोज्नुपर्ने अवस्था नरहेको विश्वास दिलाउन चाहन्छु । मेरो आस्था र निष्ठामाथि प्रश्न उठ्ने सामग्री प्रकाशित गरेर जनआस्थाले आफ्नो विश्वसनीयता कायम राख्न नखोजेकोमा दुःख लागेको छ । म एमाले बागमती प्रदेशको सचिवजस्तो महत्वपूर्ण जिम्मेवारीमा छु । पार्टी नेतृत्वले दिएको निर्देशन तथा नीति र कार्यक्रमप्रति निष्ठाका साथ जिम्मेवारी पूरा गर्दै आएको छ । वास्तविकता यस्तो हुँदाहुँदै पनि मप्रतिको आस्था र भरोसामा आँच पुऱ्याउने नियोजित प्रपञ्चका सामग्री जनआस्थाले किन सम्प्रेषण गर्नु परेको हो ! आश्चर्य र दुःख लागेको छ ।

*- नवराज सिलवाल*

## • 'मुखले ठिक्क पार्छ सूचना आयोग'

फागुन ५ गते जनआस्थाको समाचार 'सूचना तानेर कसले विदेशीलाई दिँदैछन् ?' शीर्षक भित्र म २०६८ सालदेखि नै सूचना माग्नेको गम्भिर ध्यानाकर्षण भएको छ । सूचना मागेर अख्तियारमा दिन नपाउने भन्ने बुझेको भए त मेरो सूचना आयोगमा सायद एक पनि पुनरावेदन हुने थिएँ होला । भष्टाचार पुष्टि हुने डकुमेन्ट खोज्न १४ वर्ष लाग्यो । सूचना आयोगको टिमले यस्तोमा मन र कर्मले साथ दिएको छैन, मुखले मात्र ठिक्क पारेको छ । माग्नु नै बेठीक भन्ने वर्तमान आयुक्तहरूको बुझाइ हो र म सच्चिनुपर्ने हो भने के कसरी सच्चिन सक्छु सल्लाह पाऊँ । वर्तमान आयुक्तहरूको विचार सही हो भने यसअघि गरेको लगभग उपलब्धिविहीन काम रोक्नु नै राम्रो हुन्छ कि ? सुझाव पाऊँ ।

*- शिवप्रसाद अधिकारी, हाल : तारकेश्वर नगरपालिका-८, काठमाडौं (लामबगर, प्रगतिटोल फोन : ९८४१२५३४५३, इमेल : shivasuchana@gmail .com)*

## • अपाङ्गमैत्री भयो त सडकमा मार्बल ?

इन्जिनियर मेयर बालेन साहले दरबारमार्गमा बिछ्याएको ग्रेनाइटले थप समस्या निम्त्याउँदैछ । काठमाडौं उपत्यकामा पानीको अभाव हुन नदिन ठाउँ ठाउँमा चार्जिङ्ग स्थल बनाउने अभियान छेडेका साहले ग्रेनाइट ओछ्याउँदा चार्जिङ्गको विचारलाई पुरै बेवास्ता गरेको पाइएको छ ।

ढुंगा, इँट वा स्लाबहरू बिछ्याउँदा हुने ग्यापका कारण जमिन रिचार्ज हुने अवस्था हुन्थ्यो तर पुरै ग्रेनाइट हाल्दा पानी कसरी रिचार्ज होला ? ग्रेनाइटमा प्रतिदिन झाडुपोछा गर्न पनि उत्तिकै चुनौतीपूर्ण देखिन्छ भने वर्षायाममा बटुवाहरू चिप्लेर हातखुट्टा भाँच्चिने र टाउको फुट्ने सम्भावना उत्तिकै छ । अर्कोतर्फ यो अन्तर्राष्ट्रियस्तरमै दृष्टिविहीनहरूले प्रयोग गर्ने सडक मापदण्ड विपरित देखिएको छ । दृष्टिविहीनका लागि आवश्यक पहेँलो घेरा ग्रेनाइटमा कहाँबाट ल्याएर राख्ने ? भवन होस् वा शौचालय बनाउँदा अपाङ्गतामैत्री बनाउनु पर्छ भनिएको अवस्थामा बालेनले ग्रेनाइट ओछ्याउँदा किन यस्तो सोचेनन् ? अपाङ्गता मैत्री नभएको भवनको नक्सा पास नदिने नीति आफ्नै लागि फेरेको चर्चा छ ।

# ११ जना बाहुन र एक जना लिम्बूसँग कुरा गरेर हुन्छ ?

**कमल मादेन, अध्येता/अनुसन्धानकर्मी**

*अहिले पाथिभरा केबलकारको लफडा निस्किएकै ठाउँ हाङदेवा, सिद्धिडाँडामा जन्मे- हुर्किएका हुन् कमल मादेनका बाबु, बराजेहरू । मादेन कुनै आन्दोलनकारी होइनन्, न त पहिचानवादी नै । यो आन्दोलनलाई नजिकबाट नियालिरहेका उनी धरानमा जन्मिए, त्यतै हुर्किए । दुई दशक बढी समय कम्युनिष्ट राजनीतिमा सक्रिय कमल प्राध्यापन हुँदै अनुसन्धान कर्ममा तल्लीन छन् । ०४१ सालदेखि अखिलबाट राजनीतिक यात्रा शुरु गरेका उनले ०४४ सालमा मालेको अध्ययन समूहभित्र रहेर काम गरे । ०५० सालमा एमालेको तेह्रथुम जिल्ला सदस्य, ०५६ सालमा प्रदीप नेपाल महानिर्देशक हुँदा पिपुल्स भोलेन्टियर्स केन्द्रीय सदस्य थिए । उनी सँगैका हुन् शेरधन राई । शेरधनले संखुवासभा र भोजपुर हेर्दा उनी तेह्रथुम, धनकुटा, सुनसरी र मोरङको जिम्मेवार थिए । एमालेको जनकपुर महाधिवेशनताका माओवादी ट्याग लगाउँदै उनको सदस्यता रिन्यु भएन । त्यस यता राजनीतिमा निस्क्रिय छन् । एमएस्सीसम्म अध्ययन गरेका उनी जीव तथा वनस्पति विज्ञानको प्राध्यापन र खोजीतिर युटर्न हुँदै जर्नल सम्पादनमा जुटेका छन् । पछिल्लो समय संसारमा भएका मान्छेहरूको जीन कसरी उत्पत्ति भयो ? नेपालमा बस्ने १२० थरि जनजातिको कुन कुन जेनेटिक कहिले बन्यो ? यी र यस्ता विषयमा अध्ययन गर्दैछन् ।*

***- हरि गजुरेल***



*० तपाईंका पिता पुर्खाको थलो पाथिभरामा अहिले पहिचानको आन्दोलन चर्किरहेको छ । यो केको लक्षण हो ?*

- भौगोलिक रुपमा पाथिभरा हजारौं बर्ष पहिला सानो सानो ज्वालामुखीबाट बनेको डाँडो हो, यो अन्य पहाडसँग मिल्दैन । अति सुन्दर पहाड, धेरै जन्तुको बासस्थान, विविध वनस्पति पाइने । सांस्कृतिक र भाषिक रुपमा मुक्कुम्लुङ नामले परिचित ठाउँ । स्थानीय भाषामा 'मुक्' को अर्थ शक्तिकेन्द्र र 'लुङ' को अर्थ ढुंगा हो । त्यसैले लिम्बूहरूले यसलाई शक्तिको ढुंगा वा शक्तिकी देवी मान्दै आएका छन् । मुक्तिबुङ, मुक्तिफोमाङलगायत नामले पनि चिनिने यी देवीलाई आफ्नो पुर्खा युमासँग जोड्ने गरिन्छ । यहाँ युमाको बास छ भन्ने विश्वास छ । यो स्थान लामो समयसम्म सुषुप्त अवस्थामा थियो । जब हिन्दुकरण गरेर दुर्गाको रुपमा रुपान्तरण गरियो त्यसपछि यो ठाउँको महत्व एकदमै बढेर गयो । मार्क्यण्ड पुराणमा भगवतीको अर्थ भक्तलाई रक्षा गर्ने भन्ने उल्लेख छ । लिम्बुको सांस्कृतिक कथासँग हिन्दुहरूको जल्दोबल्दो देवता भगवतीलाई जोडिएसँगै यसको महिमा बढ्दो छ । ०७२ सालसम्म यो स्थान यति धेरै प्रख्यात थिएन । पछि भगवतीको मूर्ति नै राखेर पूजा गर्न थालियो । मूर्तिमा मान्छेको आकर्षण बढेसँगै हामीले पुज्दै आएका भगवानहरू ओझेल परेकै थिए । अहिले केबलकारका नाममा यहाँको संस्कृतिमाथि नै अतिक्रमण हुन लागेको कारण पाथिभराका स्थानीय आन्दोलित भएका हुन् ।

*० पाथिभरामा केबलकार आवश्यकता हो कि होइन त ?*

- केबलकार बनाउनका लागि हाम्रो वातावरण ऐनले दुई वटा विकल्प दिएको छ । पहिलो पर्यटन, दोश्रो यातायात । यदि यातायातका लागि बन्ने हो भने दुईतिर बस्ती हुनुपर्दछ । पर्यटक र अरु पनि चढ्ने गरी । संसारका कतिपय महत्वपूर्ण ठाउँमा यसरी विकास गरिँदैन । भारतको कतिपय तीर्थस्थल हेरौं, त्यहाँ केबलकार बनेको छैन । चीनले कैलाशमा केबलकार नसकेर नबनाएको होला र ? सांस्कृतिक वस्तुहरूलाई जुन रुपमा छन्, त्यही रुपमा रहन दिनुपर्दछ । विकास निर्माण जनतालाई असर नपर्ने, ऐन कानुन प्रतिकूल नहुने गरी गरिनु पर्दछ । सीमित पार्टीलाई आर्थिक सहयोग गर्ने, भित्रभित्रै नेताहरूलाई स्वेट इक्विटी (पसिनाबेगरको शेयर हिस्सा) दिने गरी काम गर्नु एकदमै गल्ती हो । याक्थुङ्ग लिम्बुहरूको कल्चरलाई अतिक्रमण गरेर त्यहाँकी युमालाई भगवतीमा रुपान्तरण गर्ने बिषय गलत नै छ ।

*० तर, मेयरदेखि अध्यक्ष र वडा सदस्यहरू मात्र होइन निर्वाचित सांसदहरू नै केबलकार निर्माणको पक्षमा देखिन्छन्, यसमा बाहिरबाट त्यहाँ पुगेका पहिचानवादीको विरोध कत्तिको जायज भयो र ?*

- हिजोमात्र कोशी प्रदेश एमाले संसदीय दलका नेता तिलकुमार मेन्याङबो (लिम्बु)ले पाथिभरामा ऐन कानुन मिचेर गडबडी भएको खण्डमा विगतदेखि वर्तमानका कुनै लिडरलाई छोड्न मिल्दैन भन्नुभएको छ । स्थानीय केही नेतासहित निर्वाचित सांसद योगेशकुमार भट्टराई र फुङ्गलिङका मेयर अमिर मादेनले केबलकार निर्माणको पक्षमा बोलिरहेका छन् । यो लिम्बूहरूको परम्परा, पर्यावरण र जीविकोपार्जनसँग जोडिएको ठाउँ हो । तर गृह प्रशासनले केबलकारको विरोध गर्नेलाई मान्छेको रुपमा नभई पशुको रुपमा व्यवहार गरिरहेको छ । यो निन्दनीय छ ।

*० पहिचानकै आन्दोलन हो भने त स्थानीयहरू नै मैदानमा हुनुपर्नेमा राजेन्द्र महतो र आङकाजी शेर्पाहरूको प्रवेश किन त ? यो आन्दोलनमा सिक्किमतिरबाट घुसपैठ भयो भन्ने सूचना आइरहेको छ, यसबारे के भन्नुहुन्छ ?*

- बाहिरका केही व्यक्तिको सहभागिताले अर्कै चलखेल हो कि भन्ने शंका छ । यसमा आन्दोलन हाँकिरहेकाहरू चनाखो हुनु आवश्यक छ । बाहिरबाट कसैले आफ्नो इन्ट्रेष्ट पसाउन खोजेको हो कि भन्ने भान भइरहेको छ । राँके जुलुसमा चाहिँ घुसपैठ भएको छ ।

*० अहिले बार्षिक १ करोड पनि आम्दानी नभएको फुङलिङ नगरपालिकाले केबलकार बनेपछि वर्षेनि ३ करोड आम्दानी प्राप्त गर्न सक्ने त्यहाँका मेयरको आँकलन छ, के भन्नुहुन्छ ? धार्मिक पर्यटनको कोणबाट हेर्दा त्यहाँ केबलकार बन्दा लाभ नै होला नि ?*

- त्यहाँको स्थानीय बजार सुक्छ । होटल, व्यवसायी र ताप्लेजुङ बजार नै सुक्छ । गाउँ, जनता नै सुकाएर आएको पैसा समुदाय केन्द्रित भएन । विराटनगर, जोगबनी, झापालगायतका जिल्लाबाट आउने पर्यटकहरू एक दिनमै फर्कन सक्छन् । नजिकको जिल्लाकाहरू लाभन्वित होलान् । आधा जति हिँडेरै जान्छन् । काफ्लेपाटीदेखिका ५५ वटा घरले व्यवसाय गरिरहेका छन् । उनीहरूको व्यवसाय ५० प्रतिशतभन्दा तल झर्छ । तमोर करिडोर बन्दैछ । त्यसले पनि पर्यटन सुक्ने सम्भावना देखिन्छ । पूजाको सामान बेचेर, गाडी चलाएर जीवन चलाएकाहरूको जीवन ध्वस्त हुन्छ । पहिचानवादीहरूले विरोध गर्दैमा रोकिन्छ र ! म सेना लगाएर निर्णय कार्यान्वयन गरिछाड्छु भन्नेमा केपी शर्मा ओली पुगेको देख्दैछु । एमाले, कांग्रेस, माओवादीका राई लिम्बुहरू यसबारे किन बोल्दैनन् ? भन्ने लागदथ्यो तर त्यो सत्य होइन रहेछ । अहिले यो प्रकरणमा राई, लिम्बुहरू नै पार्टी निर्णयको विपक्षमा बोल्न थालेका छन् ।

*० आन्दोलनकारीका नेतामध्ये लिङखिमले ५ करोड र महेन्द्र लावतीले २५ करोड मागेको र केबलकार निर्माणकर्ता पक्षबाट कमिसन रकम नपाउने भएपछि आन्दोलन चर्काएको आरोप पनि छ नि !*

- जहाँ केबलकार बन्दैछ, त्यहाँ विश्वकै अति दुर्लभ ७ देखि ९ थरि रेडपाण्डा पाइन्छ । संकटापन्न वन्यजन्तुका अलावा क्यान्सर उपचारमा प्रयोग हुने लौठसल्लासमेत त्यहीं पाइन्छ । इआइए प्रतिवेदनमा ढाल्नुपर्ने रुखको सूचीमा लौठसल्ला उल्लेख छैन । तर म त्यहाँ पुग्दा लौठसल्लाका रुखहरू ढालिएका छन् । त्यसरी वातावरणको क्षति गरिनु हुन्न । आफ्नै हुकुम चल्ने प्रहरी, मालपोत, सिडियो, हुलाक कार्यालयको राय लिएर पुग्छ ? त्यहाँ ४३ प्रतिशत लिम्बु, त्यसपछि शेर्पा, क्षत्री, बाहुन, राई छन् । उनीहरूको धर्ममा सरोकार राख्ने सामाजिक संस्थाहरूसँग अनुमति लिएको भए आज यो दिन आउँदैन थियो । जम्मा १२ जनासँग राय लिइएमध्ये ११ जना बाहुन, क्षत्री र एक जनामात्र लिम्बु छन् । जे अध्ययन हुनुपर्ने थियो त्यो भएकै छैन । पाथिभरा केबलकार निर्माण गर्दा तयार पारिएको प्रतिवेदनले यस प्रकारको आन्दोलनको कल्पनासम्म गरेको छैन । मुकुलुङ्गको सवाल उठाएर विरोध गर्न सक्छन् भनी प्रतिवेदन तयार गर्ने समाजशास्त्रीहरूले भेउ पाएनन् । कुनै पनि प्रतिवेदन सामाजिक, आर्थिक, सांस्कृति, वातावरणीय, भौगोलिक कोणबाट लेखिएको हुनुपर्दछ ।

**चीनले कैलाशमा केबलकार नसकेर नबनाएको होला र ?**

**•••**

**राँके जुलुसमा चाहिँ घुसपैठ भएको छ ।**

**•••**

**क्यान्सर उपचारमा प्रयोग हुने लौठसल्लाका रुखहरू ढालिएका छन् ।**

*० पाथिभरा केबलकारको वातावरणीय प्रभाव मूल्याङ्कन (इआइए) प्रतिवेदन वन तथा वातावरण मन्त्रालय मन्त्रालयबाट बन्नुपर्ने कि भौतिक मन्त्रालयबाट ?*

- कुनै पनि परियोजनाले पाँच हेक्टरभन्दा बढी कभर गर्ने भएमा सहजीकरण वन मन्त्रालयको वातावरण शाखाले गर्दछ । सोभन्दा कम अन्य मन्त्रालयले पनि हेर्न मिल्छ । धेरैजसो काम संघीय मामिला तथा सामान्य प्रशासन, पर्यटन र भौतिक मन्त्रालयबाट भइरहेको हुन्छ । त्यहाँको संवेदनशीलता बुझेर राम्रोसँग वातावरणीय प्रभाव मूल्यांकन गराएको भए अहिले यो समस्या आउँदैन थियो । सरकार यसमा नराम्रोसँग चुक्यो ।

*० पाथिभरा केबलकारले ओगट्ने क्षमता पाँच हेक्टरभन्दा कम होइन र ?*

- प्रतिवेदनमा प्रष्ट उल्लेख गरिएको ६ दशमलव ११ हेक्टर जमिन आवश्यक छ । सरकारी जङ्गल र पाथिभरा सामुदायिक वनको जङ्गल ६ दशमलव ११ हेक्टरभन्दा बढी पर्दछ । त्यसकारण इआइए नै गलत छ । ठूला परियोजनाको लागि इआइए र साना परियोजनाका लागि आइइइ भनेको साना परियोजनाको पूर्व मूल्यांकन हो । इआइएको लागि बृहत अध्ययन गर्नुपर्दछ । धार्मिक, सांस्कृतिक, पर्यावरणीय हिसाबले कतिपय संवेदनशील बिषयमा विशेष गरी संरक्षण क्षेत्रको एक हेक्टर जमिनमात्र किन उपयोग नहोस् कुनै विकास निर्माणको काम गर्नु परेको खण्डमा इआइए नै गर्नुपर्दछ । इआइए गर्दा धेरै कुरा खुल्दछ, अवधि पनि त्यसले एक दुई बर्ष लिन्छ, सोही कारण सरकारले जानी बुझिकन ४ दशमलव ९७ हेक्टर जग्गा दिएको देखिन्छ । अहिले एमालेका साथीहरू यसमा केपी शर्मा ओली नभई तत्कालीन वन मन्त्री शक्ति बस्नेतको ठूलो भूमिका छ भन्दैछन् । यद्यपि अहिले काम रोकिएको छ त्यो स्वागतयोग्य कुरा हो । त्यस बेला भएको निर्णय र निर्णयकर्तामाथि छानबिन गर्नुपर्दछ ।

*० केबलकार निर्माण हुँदा जति रुख काटिने हो त्यति बराबरको विरुवा रोप्छु भनेर क्षतिपूर्ति व्यहोरेपछि आपत्ति जनाउनु पर्ने बिषय के रह्यो र ?*

- त्यही कारण त उक्त वातावरणीय प्रभाव मूल्यांकन प्रतिवेदनलाई पुङ न पुच्छरको भन्दै आएको हुँ । त्यहाँ जम्माजम्मी १० हजार २ सय ३१ वटा रूख काट्ने, त्यसमा ठूला रुख ११२ वटा पर्दछन् भनिएको छ । २ लाख ५६ हजार रुख रोप्नुपर्ने हुन्छ पुरानो नियमावलीअनुसार । एउटा रुख काट्दा २५ वटा रोप्नुपर्ने हुन्छ । सो हिसाबले २८ सय रुख रोप्ने बिषय प्रतिवेदनमा लेखिएको छ । जुन ठाउँमा रुख काटिएको हो, त्यस्तै भूगोलको जग्गा किनेर सरकारलाई पास गर्नुपर्दछ । पैसा छुट्याउनुपर्दछ २८ सय रुपैंयाँ रोपेर हुर्काउनका लागि उहाँले जम्मा २० लाख छुट्टयाउनु भएको छ तर त्यहाँ जग्गा किन्ने कुरा छैन । त्यो २० लाख पनि सरकारको खातामा हालियो कि हालिएन ? जग्गा किन्ने कुरा त छँदै छैन ।

*० अरुण तेश्रो परियोजनाको इआइए पनि हचुवाकै भरमा भएको सुनिन्छ, त्यसबारे पनि केही अध्ययन गर्नुभएको थियो ?*

- अधिकांश नेपालका आइइए, इआइए हचुवाको भरमा हुँदै आएको छ । केबलकारको मात्र होइन । अरुण थर्डमा समेत यस्तै बदमासी भएको छ । सर्भे गर्दा हाम्रो फर्म्याट फलो नै गरिएको थिएन । त्यसबारेमा बाहिर कुरै उठ्दैन । व्यापारीहरूले इआइएको मतलब नै राख्दैनन् । सरकारले पास गरेको जति पनि परियोजना छ, त्यसको अवस्था के कस्तो छ भनेर नेपाल सरकार, वन मन्त्रालयमातहतको वातावरण विभागमा १४ जना कर्मचारीको टिम छ । त्यसमा चन्द्रागिरीको अभिलेखै छैन । त्यहाँ जम्मा ४१४ वटा परियोजनाको मात्र अभिलेख छ । तिनको मात्र सरकारले अनुमगन गरिरहेको छ । अन्तर्राष्ट्रिय रुपमा सबैभन्दा ठूलो ब्लु प्रिन्ट नै इआइए रिपोर्ट हो । यसतर्फ हाम्रो सरकारको ध्यानै पुग्न सकेको छैन । वातावरण विभागले यसलाई रोक्ने, दण्ड जरिवाना तिराउने व्यवस्था ऐनमै गरेको छ । तर लुते भयो विभाग, कानुन कार्यान्वयन हुँदैन ।

*० कुनै समय तपाईंले राजनीति गर्नुभएको पार्टी सरकारमा छ । उसको कार्यशैलीलाई कसरी लिनुहुन्छ ?*

- झण्डै ३० बर्ष कम्युनिष्ट राजनीतिमा बिताएँ । अहिले दुःख लाग्छ, मैले गलत पढेछु । जब जब सत्तामा कम्युनिष्ट पुग्छ, तब घोर दक्षिणपन्थी, स्वार्थी हुँदो रहेछ ।

## फोटो

सुरेश महर्जन




**लेखेकै छ 'नो पार्किङ', हालत के छ हेर्नोस्, लागु गर्न सक्नुहुन्न अहिल्यै यसलाई फेर्नोस्**
**काम एउटा, कुरा अर्थोक भयो सबको बानी, यस्तो तालले देशैलाई पुऱ्याउँछ हानि**

## मेरो कथा, मेरो व्यथा

हरिजी
priyarasuwa@gmail.com

# पतिलाई भऱ्याङ मात्र नबनाउनु न प्रिया !

श्रीमानभन्दा श्रीमती पद र प्रतिष्ठाको हिसाबले अगाडि हुँदा धेरैका घरबार भत्किए । हालैमात्र एलिना चौहान र विष्णु सापकोटाको सम्बन्धमा पूर्णविराम लागेको छ । यस्तै नेपाल सरकारको विशिष्ठ श्रेणी सचिव बनेर रेकर्ड ब्रेक गराउन सफल महिला पात्रकै घरबार यसैगरी भत्कियो । गायन क्षेत्रमा उदाउँदै गर्दा अञ्जु पन्त र मनोज सेवाबीचको सम्बन्धमा फाटो आयो । यी र यस्ता प्रशस्त उदाहरण छन्, श्रीमतीले नाम र दाम कमाउन थालेपछि श्रीमानसँगको सम्बन्धमा फाटो देखिने गरेका । सेलिब्रेटीको घर बार बिग्रिएका खबरहरू छापिन्छन् मिडियामा तर सर्वसाधारणका यसैगरी हजारौं घर भत्किएका छन् । आफूले खाई नखाई पढाए र नर्स बनाएकी पात्रले । खोला तरेर लौरो बिर्सेपछि रुँदै गरेको पुरुषको कथा हो यो ।

जुन दिनदेखि श्रीमतिले जागिर खान थालिन् त्यहींबाट शुरु भयो मेरो तनाव । जहानलाई स्टाफ नर्स पढाउन र योग्य बनाउन केमात्र गरिन ? उनका इच्छा/चाहना, रहर र सपना पूरा गर्न आफ्नो सपनालाई तिलाञ्जली दिएँ । पुगें गढुवाल, हिमाञ्चलदेखि कतारसम्म । बेल्चा र साबेल चलाएँ । पसिना होइन, रगत बगाएँ । जति कमाएँ, उनैमाथि खन्याएँ । जब सारा इच्छा र चाहना पूरा भए, तब मलाई किनारैमा छाडेर खोला तरिन् । अहिले उनीसँग सबथोक छ । म रित्तो छु । अभाव र तनावमा गुज्रियो बालापन । कष्टै कष्ट र दुखै दुखको भवसागरमा । खेतीपातीबाहेक अरु थिएन आम्दानीको स्रोत । सार्वजनिक विदाका दिन, दिनभरजसो अनि विद्यालय खुलेका दिन बिहानभरि साहुहरूको खेतमा हलो जोतेर दिउँसो स्कूल पढ्न जान्थें । त्यही निमेकका भरमा परिवारको पेट पाल्नुपर्दथ्यो /पालिन्थ्यो । बाल्यकालदेखि दु:खको भुमरीमा डुबियो । गिट्टी, बालुवा, ढुङ्गा, माटो गरेर पढाई खर्च जुटाइन्थ्यो । बुवा/आमाको कोखबाट जन्मिएका पाँच सन्तानमध्ये जेठो म । खाने मुख तीनबाट बढेर ८ पुगे । जग्गा जमिनको आकार सीमित, खाने मुख भने बढेको बढ्यै ।

नुवाकोट जिल्ला कुनै समय अर्जुननरसिंह केसीको चुनावी पकड र काँग्रेसको गढ भएको ठाउँ । पछि काँग्रेस होइन, माओवादीतिर लागियो । शिक्षकहरू अधिकांश काँग्रेसी । माओवादीमा लागेकै कारण नौ कक्षा पढ्दै गर्दा ४ विषयमा फेल गराइदिए । त्यही कारण छाडें, स्कूल । र, भासिएँ हिमाचलतिर । सुरुङ्गमा काम गर्दागर्दै गहिरो चोट लाग्यो । अस्पतालको शैयामा पुगेपछि नर्सहरूको सेवाबाट प्रभावित भएँ । लाग्थ्यो सकेसम्म आफैं सरकारी सेवामा लाग्छु, नभए घरपरिवार वा जहानलाई सरकारी कर्मचारी बनाउँछु । त्यही घिड्घिडोले अहिले मेरो जीवन यसरी बर्बाद हुँदै छ । अहिले पछुताउँछु- मेरो सपना र कल्पना गलत रहेछ । उपचारपछि केही तँग्रिएँ । सुरुङ्गमा काम गर्न सक्ने स्थिति रहेन । त्यहाँबाट दिल्ली पुगेर सेक्युरिटी गार्डको काम गरें । तर, आम्दानी सन्तोषजनक थिएन । कहाँको सपना बोकेर हिँडेको मान्छे, कहाँ रुमल्लिरहेको थिएँ । कुकुरले पनि गल्ली गल्लीमा घुमेर आफ्नो ज्यान त पालेकै छ । त्यही ज्यान पाल्नेबाहेक अरु केही भएन । घर फर्किएँ, मंहङ्गो ब्याजमा ऋृण काढेर कतार पुगेँ । परिवार पाल्नु थियो । विवाह गर्नु थियो । आफू सरकारी

**मेरै आड भरोसामा पढिन् । नर्स बनिन्, जागिर खाइन् र मलाई गन्न छाडिन् । यही माघमा मात्र अष्ट्रेलियाको पिआरवालालाई रोजेर इन्गेजमेन्ट गरेको भेटियो । एक जना मान्छेको इन्गेजमेन्ट जीवनमा कति चोटी हुन्छ ?**

सेवामा लाग्न सकिएन, भाइ बहिनीलाई सरकारी सेवामा लगाउन सकिन्छ कि भन्ने ध्येय थियो । त्यही आर्जित रकमले ४ दिदी बहिनीको बिवाहवारी सम्पन्न भयो । र, बीचमा फर्किएँ आफ्नै देश । धेरैको नजरमा लाहुरे थिएँ । यस्तैमा आफन्ती मार्फत विवाहको प्रस्ताव आयो । स्वीकारें । भर्खर एसएलसी परीक्षा उत्तिर्ण गरेकी रुपा मुडभरीसँग वैवाहिक बन्धनमा बाँधिएँ ०७७ साल वैशाख २६ गते उनको सिउँदोमा सिन्दुर भरें । एक जुनी होइन सातै जुनी सँगै मर्ने सँगै बाच्ने कसम खाएँ । तर त्यो बाचा र कसम सात वर्ष पनि टिकेन ।

मनमा सपना थियो जहानलाई नर्स बनाउने । त्यही सपना पूरा गर्नका लागि पुन: खाडीतिर लागेँ । विवाह गरेको चार महिनामै कतार गएँ । पचास डिग्रीको गर्मीमा रातदिन रगत पसिना बगाएर श्रीमतीलाई स्टाफ नर्स बनाउन चाहन्थें । आफ्नो सपना पूरा गर्नका लागि बूढा भएका बुवा आमाको वास्ता गरिएन । श्रीमतीलाई च्यापेर काठमाडौं ल्याएँ । उनकै दाजुको साथमा बस्थिन्, बालाजुतिर । अनेक जोडबलबाट पिसिएल नर्सिङमा भर्ना गरें । तीन वर्षे पिसिएल सकिए सँगै गाउँकै एक जना दाजु वीर अस्पतालमा कार्यरत हुनुहुन्थ्यो, उहाँलाई आग्रह गरेर करारमा जागिर लगाएँ । अब खुशीको दिन फर्कियो, श्रीमतीलाई लोकसेवा भिड्न लगाएर स्थायी सरकारी जागिर दिलाउँछु भन्ने कल्पना र सपनामा डुब्दै थिएँ । विवाहदेखि पिसिएल नर्सिङ्ग अध्ययनरत रहँदासम्मको स्थिति यस्तो थियो कि घण्टैपिच्छे च्याटमा गफिन्थ्यौं । उनको फेसबुक, इन्स्ट्रादेखि टिकटकमा हाम्रो संयुक्त फोटो गायब भई एकल फोटो मात्र पोष्ट भएसँगै मनमा चिसो त पसेको हो । उनले आफू अविवाहित भएको बताएर सामाजिक सञ्जालबाटै अष्ट्रेलियाको पिआरवालालाई पट्याएकी रहिछन् । जब श्रीमान श्रीमतीको बीचमा तेश्रो मान्छे हावी हुन थाल्यो त्यस पछि उनलाई मेरो फोन उठाउन, म्यासेजको रिप्लाई गर्नसमेत मुस्किल पर्ने गर्थ्यो । यो थाहा पाउन पनि मलाई तीन बर्ष कुर्नुपऱ्यो । उनलाई मेरो त्याग, समर्पण र प्रेमभन्दा पनि अष्ट्रेलियातिरको पिआरवाला पो प्यारो लाग्न थालेछ । मेरै आड भरोसामा पढिन् । नर्स बनिन्, जागिर खाइन् मलाई गन्न छाडिन् । यही माघमा मात्र अष्ट्रेलियाको पिआरवालालाई रोजेर इन्गेजमेन्ट गरेको भेटियो । एक जना मान्छेको इन्गेजमेन्ट जीवनमा कति चोटी हुन्छ ?

एउटा श्रीमानले श्रीमतीलाई पद र प्रतिष्ठामा पुऱ्याउन कति श्रम, त्याग गर्छ त्यसको हिसाब कसैले खोज्दैन/सोध्दैन । भन्छन् लोग्ने मान्छे भएर रुनु हुँदैन । तर पछिल्लो एक महिना नरोएको पल छैन । उनीसँग सबैथोक छ । तर म रित्तो छु । केही समय अगाडि यस्तै गरी श्रम गरेर श्रीमतीलाई प्रहरीमा जागिर खुवाउने एक जना साथीले उही नियति भोगेका रहेछन् । विदेशमा श्रम बेचेर श्रीमतीलाई सुब्बामा नियुक्ति दिलाएका एक साथीको घरबार समेत उपसचिव हावी हुँदा भत्किएको खबर यही पत्रिकामा पढेको थिएँ । यसरी पुरुषलाई रुवाएर कहिलेसम्म हाँस्छन् होला ती महिलाहरू ? - *पशुपति न्यौपाने, नुवाकोट*

# वडा नम्बर आठ, बालेनको भरपुर साथ

काम चलिरहेको संरचना भत्काउने, महानगरबासीले तिरेको कर नयाँ निर्माणमा खन्याउने ! काठमाडौं महानगरपालिकाको मेयरमा बालेन साह निर्वाचित भएदेखि चलिरहेको धन्दा हो यो । भौतिक पूर्वाधार निर्माणको नाममा महानगरवासीले तिरेको करको चरम दुरूपयोग भइरहेको पाइएको पाइएको छ । यता, वडाध्यक्षहरू पनि मेयरकै बाटोमा हिँडेका छन् । उनीहरू पुरानो भत्काउँदै नयाँ निर्माण गर्नतर्फ उन्मुख छन् । निर्माण सम्पन्न भएको केही वर्षमात्रै बितेको संरचना भत्काएर नयाँ बनाउन मेयरले वडाध्यक्षहरूलाई हौस्याएका छन् । यी सब केका लागि ? स्रोतका अनुसार परम्परागत शैलीको शहर बनाउने नाममा पैसा पानीझैं बगाइएको छ । ८ का वडाध्यक्ष आशामान संगतलाई बालेनको सबैभन्दा बढी साथ छ । केही समयअघि महानगरका कम्प्युटर अपरेटरको नेतृत्वमा जर्मन घुम्न पाउने भाग्यमानी वडाध्यक्षमा पर्छन्, संगत । नेपाली कांग्रेसबाट निर्वाचित उनको स्वभाव कडा खालको छ । सम्पदा तथा पर्यटन समितिको संयोजकसमेत रहेका संगतले भत्काउने हरेक कामको नेतृत्व गर्छन् । तर, कुनै पनि कार्यक्रम विवादमुक्त तवरले सम्पन्न हुन सकेको छैन । चाहे त्यो वसन्तपुर डबलीमा प्रस्तुत गरिएको अर्केष्ट्रा होस्, चाहे स्थानीय बाजा भन्दै कोटेशनमा दिइने पाँच लाख रुपैयाँ बजेटको तालिम । विवाद बढेपछि बालेनले सम्पदा विभाग प्रमुख श्रृजु प्रधानलाई प्रशासन शाखामा सरुवा गरिदिएका छन् । सम्पदाका सम्पूर्ण कार्यक्रमको नेतृत्व प्रधानले नै गर्छिन् । जबकि, वर्तमान प्रमुख कुमारी राईले ती कार्यक्रम सञ्चालन गर्नुपर्ने हो ।

प्रधानमाथि संगतले कृपा बर्साएकाले राई दबिन बाध्य भएको स्रोतको जिकिर छ । अर्कोतर्फ हरेक शनिबार वडा नम्बर ५, हाँडीगाउँमा हुने मेलाको सम्पूर्ण बन्दोबस्त पनि प्रधानले नै गर्दै आएकी छन् । वडामा 'स्वच्छ हावा' नामक अमेरिकी परियोजना सञ्चालित छ । जसको अमेरिकन कन्सल्टेण्ट प्रधानका श्रीमान् हुन् । सो कार्य पनि संगतकै मातहत छ । हाल वडा नम्बर ८ स्थित जयबागेश्वरी सिफलको सेतो ढोका संगतले पुरानो भत्काएर नयाँ बनाउन लगाएका छन् । ढोका निर्माणको ठेक्का स्ट्याण्डर्ड अस्फल्ट एण्ड कन्स्ट्रक्सन कम्पनी प्रालिले पाएको छ । मंसिर २३ गतेदेखि थालिएको काम एक वर्षमा सकाइसक्नुपर्नेगरी सम्झौता भएको छ । भ्याट र पिएसबाहेक ४४ लाख ३८ हजार २१८ रुपैयाँ खर्च गरेर नयाँ ढोका बनाउनु पछाडिको कारण भत्किएर वा जोखिम भएर होइन । राम्रै ढोका भत्काएर अर्को बनाउन थालिएको हो । सो ढोका भत्काएकोमा स्थानीय पनि रुष्ट छन् । एक स्थानीयले भने, 'वडाध्यक्षले राम्रो काम गरेको छु भनी देखाउनका लागि भत्काएका होलान् । नत्र राम्रो ढोका थियो, भत्काउनुपर्ने आवश्यकता किन पऱ्यो ?' त्यहाँ मात्र नभएर अन्य धेरै स्थानमा सो प्रवृत्ति देखिएको छ । पुरानो भत्काउँदै नयाँ बनाउनुको मुख्य उद्देश्य कमिसन नै रहेको महानगरको सार्वजनिक निर्माण विभागका इन्जिनियरहरू बताउँछन् । एक इन्जिनियर भन्छन्, 'मेयरको निर्देशनमा संरचना भत्काइन्छ । पुरानो भत्काउँदै नयाँ बनाउनुको मुख्य उद्देश्य खानपिन नै हो । कमिसनका लागि चाहिने-नचाहिने ठाउँमा खर्च गरिएको छ ।' मेयरको दाहिने हात भएर हिँडेका संगतलाई ५८ लाखको गाडी दिइएको छ । हिँडेर एक घण्टामा घुम्न सकिने वडा प्रमुखलाई महंगो गाडी दिइएपछि अन्य जनप्रतिनिधिले प्रश्न उठाएका छन् । बाहिर नदेखिने र भित्रभित्रबाटै खर्च उठाउने मेयरको सिको सिकेका उनले आफ्नो ज्वाइँमार्फत बटुल्ने स्रोतको दाबी छ । यसको प्रमाण बालेनको सचिवालयसँग छ । तर, मेयरले उनीमाथि कारबाही गरेका छैनन् । उल्टै निर्माणको नाममा बजेट थपिदिँदै आएका छन् । जसका कारण महानगरभित्र एउटा थेगो व्यापक चर्चामा छ, 'वडा नम्बर आठ, मेयर बालेनको साथ ।' यता, संगतले भने परम्परागत शैलीको ढोका बनाउनका लागि पुरानो ढोका भत्काइएको बताए । सो क्षेत्रलाई परम्परागत शैलीमा बदल्न लागिएको जानकारी दिए । 'पुरानो भन्दा पनि हामीले परम्परागत शैलीको ढोका बनाउन खोजेका हौं । पहिले सिमेण्टको ढोका थियो । अन्य धेरै स्थानमा निर्माणको काम गरिरहेका छौं । सेतो ढोका नजिकै फल्चा निर्माणको काम भइरहेको छ', उनले भने ।

# 'डार्क फाइल' को नयाँ अवतार

रास्वपा सभापति रवि लामिछाने संस्थापक रहेको सिधा कुरा डटकमविरुद्ध परेको अदालतको अवहेलना मुद्दामा अभियुक्त रहेका राजकुमार तिमल्सिनालाई 'फेक अडियो' बनाएको अभियोगमा सर्वोच्चले ६ महिना कैद सजाय ठेकेको धेरै भएको छैन । सर्वोच्च अदालतबाट २०८१ साल असोज १३ गतेलाई जेल सजायको फैसला भएको थियो । उनै तिमल्सिना पुन: नयाँ अवतारमा देखिएका छन् ।

तिमल्सिनाले 'द डार्क फाइल अभियान' अभियान शुरु गरेका हुन् । उक्त अभियानबारे आफूलाई सामाजिक अभियन्ता बताउने पूर्व खानेपानी सचिव भीम उपाध्यायले फेसबुकमा शेयर गरी थप प्रचार प्रसार गरिरहेका छन् । तिमल्सिनाले सामाजिक सञ्जालमा यो अभियानको पहिलो राष्ट्रिय सम्मेलन र देशव्यापी संगठन विस्तार कार्यक्रम सञ्चालन भैरहेको बताएका छन् । उनले कसैसँग सहयोग नलिई नागरिकको बलमा अभियान चालेको दाबी गर्दै त्यस्तो अभियानलाई साथ दिन आग्रह पनि गरिरहेको देखिन्छ । तिमिल्सिनाले कुनै पनि निकायको डलर र भ्रष्टाचारीको सहयोग आफूहरूलाई नचाहिने बताउँदा बताउँदै पनि 'एक दिनको खाजा र खानाको लागि कति सहयोग गर्न सक्नु हुन्छ ?' भन्दै आर्थिक जोहो गर्न खोजेका छन् । यसरी सर्वोच्चले तोकेको सजायमा माफी मिनाहा पाएका तिमल्सिनाले 'डार्क फाइल अभियान' का नाममा सार्वजनिक रुपमा सहयोग माग्दै हिँडेपछि कुतुहलतासँगै सन्देह पनि उत्पन्न भएको छ । कतिपयले पाँचवटा सहकारी ठगी प्रकरणमा मुद्दा खेपिरहेका रास्वपा सभापति एवम् पूर्व गृहमन्त्री रवि लामिछानेको छाया अभियानका रुपमा समेत अर्थ्याएका छन् । पत्रकारहरूबीचमै पनि लामिछानेको 'ब्याक सपोर्ट' मा डार्कफाइल अभियान चलाउन थालिएको चर्चा चल्ने गरेको छ । लामिछानेले ६ महिना जेल बसेका तिमल्सिनालाई पत्याउने कारण र अभियानमा सघाउनुको भित्री मक्सद भने खुलेको छैन । अभियानकै बिषयमा फेसबुकहरूमा पनि विभिन्न टिकाटिप्पणी आइरहेका छन् । एकजना सामाजिक सजाल प्रयोगकर्ताले त यो अभियान एउटा फण्डा रहेको बताउँदै भ्रष्टाचारको आशंका उब्जाएका छन् । 'द डार्कफाईल नामै काफी भनेजस्तो आफैं डार्क काममा लागेर अकुत कमाउने हुन् कि भन्ने आम जनमानसमा शंका छ ।' सर्वोच्च अदालतको संवैधानिक इजलासमा संलग्न न्यायाधीश, कानुनव्यवसायी, ठूला मिडियाका मालिक र पत्रकारमाथि अख्तियारको 'स्टिङ अप्रेसन' सँग जोडेर चलखेल भएको आधारहीन र अपुष्ट अडियो तयार पार्न रास्वपा सभापति लामिछानेको भूमिका रहेको आशंकाहरू समेत नभएका होइनन् । सर्वोच्च अदालतले स्वतन्त्र न्यायपालिका र व्यावसायिक मिडियामाथि लाञ्छना लगाउँदै मिथ्या समाचार प्रकाशित भएको ठहरसहित सिधाकुरा डटकमका प्रकाशक र सम्पादकविरुद्धको निवेदनलाई फौजदारी लगतमा राख्न आदेश दिएको छ । फेरि पनि लामिछानेको उक्साहटमा तिमल्सिना प्रयोग भए कि भन्ने टिप्पणी पनि हुने गरेको छ । प्रधानन्यायाधीश विश्वम्भरप्रसाद श्रेष्ठ र न्यायाधीशहरू प्रकाशमानसिंह राउत, सपना प्रधान मल्ल, प्रकाशकुमार ढुंगाना, हरिप्रसाद फुयाँल, नहकुल सुवेदी, विनोद शर्मा, महेश शर्मा पौडेल र बालकृष्ण ढकाल रहेको बृहत् पूर्ण इजलासले तिमल्सिनालाई ६ महिना जेल सजायँ हुने फैसला गरेको थियो । फौजदारी कसुर मानिने अदालतको अवहेलनामा सजाय पाएका व्यक्तिले यसरी अभयानका नाममा कुनै संघ-संगठन खोल्न नपाउने कानुनी व्यवस्थासमेत छ । उनलाई केही समय जेल बसेपछि अवहेलनाको कसुरमा सजाय मिनाहा गरिएको हो, सफाइ होइन । तर यसका बाबजुद तिमल्सिना किन एकाएक जागे भन्ने प्रश्नचाहिँ छ ।

## पूर्वराजा...

*असन्तुष्टि आन्तरिक पक्ष हो । यसले व्यवस्था नै कमजोर हुँदै गएको र राजतन्त्र पुनर्स्थापनाको पक्षमा वातावरण बनाइरहेको निश्कर्ष छ भन्छन् राजावादीहरू । राप्रपाका नेताहरूले आन्तरिक पक्षलाई नै राजा फर्काउने निर्णायक कारण दावी गरेको अवस्थामा ज्ञानेन्द्रले भने बाह्य शक्तिमाथि बढी भरोशा गरेको देखिन्छ । 'कमल थापा, राजेन्द्र लिङ्देनहरूको लहैलहैमा लागेर हुँदैन भन्ने उहाँलाई थाहा छ, त्यसैले अहिले सत्तामा फर्किने रहर गर्नुमा आन्तरिकभन्दा बाह्य कारण नै मुख्य हो', राजाको पालामा मन्त्री भएका एकजना पूर्वपञ्चले विश्लेषण गरे ।*

*वर्तमान सत्ता गठबन्धनलाई नरुचाएको दक्षिणीको छिमेकी भारतको इशारामा पूर्वराजा उफ्रिएको ठान्नेहरूलाई उनको जवाफ छ, 'दिल्ली सम्झौताले गणतन्त्र आयो, अब राजतन्त्र पनि उनीहरूकै कारण फर्किन्छ ।' संसदका दुई ठूला दल कांग्रेस र एमालेको गठबन्धन सरकारलाई भारतले नरुचाएको मात्र हैन, निषेध नै गरेको देखिन्छ । प्रधानमन्त्री केपी शर्मा ओलीलाई सात महिनासम्म भ्रमणमा नबोलाएको उसले कांग्रेस सभापति शेरबहादुर देउवालाई पनि त्यसैगरी जिल्याईदिएको छ । तिर्थाटनको बहानामा दिल्लीमा उच्चस्तरीय राजनीतिक भेटवार्ता गर्न खोजेका देउवालाई भेट्न इन्कार गरेर भारतीय संस्थापन पक्षले नेपाल मामलामा लाइन क्लियर गरेको अवस्था छ । दुई ठूला पार्टीको गठबन्धनलाई दिल्लीले गरेको यो व्यवहारबाट हौसिएका पूर्वराजा यसैमा टेकेर संग्राहालयमा थन्किएको श्रीपेच पहिरिने दाउमा देखिन्छन् ।*

*'वर्तमान सरकारबाट कांग्रेस बाहिर निस्किएन भने भारतले प्रणाली नै उलटफेर गर्छ भन्ने हाम्रो बुझाइ छ', उनै पूर्वपञ्च ठोकुवा गर्छन्, 'त्यस स्थितिमा सेनाले पनि साथ दिन्छ र राजसंस्था फर्काउन सकिन्छ भन्ने सरकार (ज्ञानेन्द्र) को बुझाइ हो ।' यही बुझाइका आधारमा पूर्वराजाले सत्तामा फर्किने मनसुवासहितको वक्तव्य निकालेको बुझिन्छ ।*

*अहिले भारतमा अति हिन्दुवादी नेता नरेन्द्र मोदीको नेतृत्वमा सरकार छ । उनी आफैँमा गणतन्त्र र धर्मनिरपेक्षतावादी होइनन् । गणतन्त्रको पृष्ठभूमि मानिने माओवादी र सात राजनीतिक दलबीच १२ बुँदे समझदारी हुँदा भाजपा प्रतिपक्षमा थियो । त्यसैले २०६२/०६३ को राजनीतिक परिवर्तनमा भारतको भूमिकाबारे चर्चा हुँदा भाजपा होइन, कांग्रेस (आइ) जोडिन्छ । राजावादीहरूले भन्दै आएको कुरा के हो भने अहिले भारतमा मोदी बलियो भएकाले नेपालमा राजतन्त्र र हिन्दुराष्ट्र फर्काउने उर्बर समय छ । ज्ञानेन्द्रको बारम्बारको भारत दौडले पनि त्यही भन्छ ।*

*पछिल्लो पटक गत महिना ज्ञानेन्द्रले उत्तर प्रदेशका मुख्यमन्त्री योगी आदित्यनाथसँग भेटवार्ता गरेका थिए । नरेन्द्र मोदीका खास विश्वासपात्र मानिने योगी नेपालमा हिन्दूराष्ट्र र राजसंस्था पुनर्स्थापना गराउने पक्षमा खुलेआम वकालत गर्दै आएका व्यक्ति हुन् ज्ञानेन्द्रलाई भेटेलगत्तै दिल्ली पुगेका उनले त्यहाँ राष्ट्रपति, उपराष्ट्रपति र गृहमन्त्रीसँग संवाद गरेका थिए । नेपालका पूर्वराजालाई बारम्बार भेट गरिरहने योगी पाँच पटक देशको प्रधानमन्त्री भैसकेका र सबैभन्दा ठूलो पार्टीका शक्तिशाली सभापति शेरबहादुर देउवासँग भने भेट्न तर्किएको चर्चा भैरहेको छ ।*

*अर्कोतिर यहीबेला अमेरिकाले अनुदान सहयता बन्द गरेकाले अब देशको अर्थतन्त्र झन् चौपट्ट हुने र धमिलो पानीमा माछा मार्न सकिन्छ भन्ने हिसाबले पनि पूर्वराजा अलि बढी नै हौसिएको कतिपयको अनुमान छ । फागुन ७ को वक्तव्यलाई एकथरीले अमेरिकाले जगाइदिएको आशा हो पनि भनेका छन् । अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले नेपालको संघीयता सवलीकरण शीर्षकमा दिने भनिएको अनुदानलाई 'फ्रड' भनिदिए । खासमा अनुदानको औचित्य र आवश्यकतामाथि प्रश्न उठाउँदै ट्रम्पले सांकेतिक हिसाबले त्यस्तो टिप्पणी गरेका थिए । यसलाई राजावादीहरूले भने अमेरिका संघीयताको विपक्षमा उभियो भन्ने अर्थ लगाइरहेका छन् ।*

*राजवादीहरूको सल्बलाहट एकातिर छ, अर्कोतिर भूराजनीतिक कारणले राजनीति अप्ठेरोमा पर्दैछ । भारतीयको रुचि प्रतिकूलको गठबन्धन भनिए पनि देउवाले खुट्टा टेक्दासम्म सरकार गिर्ने सम्भावना त छैन । तर, सरकार टिक्नु र टिकाइनु फरक कुरा हो । गणितीय हिसाबले सरकार जबर्जस्ती टिकाउने तर डेलिभरी दिन नसक्ने हो भने नागरिक असन्तुष्टि थप चर्किन्छ र त्यसले अन्ततः पूर्वराजा ज्ञानेन्द्रको उफ्राइलाई नै मलजल गर्छ ।*

*दक्षिणसँग सम्बन्ध बिगारेको सरकारले चीनलाई पनि विश्वासमा लिन सकेको छैन । चिनियाँ परियोजना बिआरआइमा सैद्धान्तिक सहमति जनाएको झण्डै एक दशकपछि कार्यक्रम कार्यान्वयन सम्झौता त भयो, तर न चीन खुशी छ न नेपाली कांग्रेस । चीनलाई परेको छ- बिआरआइको दुनियाँलाई एउटा मोडालिटीमा छ, नेपाललाई बेग्लै बनाउनुपर्‍यो । सत्ता गठबन्धन जोगाउनका लागि बाध्यात्मक अवस्थामा सम्झौता गर्नुपरेको कांग्रेसले त खुलेरै बोलिसकेको छ । यस्तो अन्योलग्रस्त स्थितिमा बिआरआई फ्रेमवर्कमा परेका परियोजना अघि बढ्नेमा दुवै पक्षलाई विश्वास छैन । 'ओलीकै पालामा यस्तो अल्याङमल्याङ भैरहेको छ भने देउवा प्रधानमन्त्री भएपछि झन् के होला ? चिनियाँहरूको चिन्ता छ ।' अहिले केपी प्रधानमन्त्री भएकाले चीनले रणनीतिक हिसाबले यो सरकार ठीक छ भने पनि सम्झौताअनुसार काम भएन भने प्रश्न उठाउँछ नै । भारतीयहरूले चाहिँ 'केपीले टेर्दैन, बेलाबेला फ्याट्ट हान्दिन्छ, यो मान्छे डेञ्जर छ' भन्ने गरेको पाइन्छ ।*

## दिल्ली...

थिए । तर, एमालेसँग लिखित सहमति भैसकेकाले धोका दिन नमिल्ने भन्दै देउवाले प्रस्ताव अस्वीकार गरिदिए । त्यसपछि थप चिढिएको भारतले सरकार बनेको आठ महिना बितिसक्दा पनि प्रधानमन्त्री ओलीलाई औपचारिक निम्तो दिएको छैन । सरकार गठनलगत्तै पहिले दिल्ली जाने रहर गरेका ओलीले आफ्नो तर्फबाट भरमग्दुर प्रयास नगरेको होइन । दिल्ली जाने हुटहुटी पूरा गर्न डा. आरजु राणा देउवालाई दुईचोटि दिल्ली पठाईएको पनि हो । तर, भारतीय संस्थापन पक्ष ओलीलाई स्वागत गर्न अझै तयार देखिंदैन ।

सरकार बन्नासाथ परराष्ट्रमन्त्रीको हैसियतमा दिल्ली पुगेकी आरजुलाई प्रधानमन्त्रीसरह स्वागत-सत्कार गरेको भारतले पछिल्लो पटक भने पूरै बेवास्ता गर्‍यो । निम्ता माग्न प्रधानमन्त्रीको दूत बनेर गएकी उनले प्रधानमन्त्री नरेन्द्र मोदी, विदेशमन्त्री एस. जयशंकर, अजित डोभालसँग त भेट्न पाइनन् नै बिजेपीका सामान्य नेताले समेत भेट दिएनन् । भारतसँग सम्बन्ध सुधारेर ओलीको भ्रमण गराउने उद्धेश्यसहित जर्मनीबाटै दिल्ली पुगेकी उनले उल्टै अपमान खेपेर रित्तोहात स्वदेश फर्किनुपर्‍यो । जबकि भदौ २ गते पहिलोचोटि जाँदा दिल्लीमा अभूतपूर्व स्वागत गरिएको थियो । यो पृष्ठभूमिमा फागुन ७ गते बुधबार दिउँसो एकाएक देउवा भारत जान लागेको खबर बाहिरियो । उत्तर प्रदेश सरकारले प्रयागराजमा आयोजना गर्न लागेको 'कुम्भ ग्लोबल समिट अन डेभलपमेन्ट एण्ड सस्टेनेबिलिटी' कार्यक्रममा प्रमुख वक्ताका रुपमा निम्त्याइएको थियो । त्यहाँका मुख्यमन्त्री योगी आदित्यनाथसहित बिभिन्न देशका शीर्ष नेता र मन्त्रीहरू सहभागी हुने भनिएको कार्यक्रमका निम्ति देउवाको तस्वीरसहितको ब्यानर सार्वजनिक भैसकेको थियो । निजी सचिव भानु देउवासँगै जगदम्बा इन्टरप्राइजेजका अध्यक्ष अनिल रुंगटालाई लिएर एअर इण्डियाको उडानमा बिहीबार दिउँसो ३ बजे दिल्ली जाने कार्यक्रम थियो ।

तर, एकाएक देउवाले भ्रमण स्थगित गरे । पाँच पटक मुलुकको कार्यकारी प्रमुख भैसकेका र भावी प्रधानमन्त्रीको रुपमा समेत हेरिएका देशकै सबैभन्दा ठूलो पार्टीका सभापतिको अचानक भ्रमण रोकिएको विषयमा कांग्रेसले आधिकारिक धारणा सार्वजनिक गरेको छैन । उडिसामा नेपाली विद्यार्थी मृत भेटिएको घटनापछि उत्पन्न परिस्थिति र महाकुम्भको समापनमा मुस्लिमहरूले भागदौड मच्चाउने खतरालाई मध्यनजर गर्दै भ्रमण रद्ध गरेको हल्ला पिटाए पनि दिल्लीमा उच्चस्तरीय भेटघाट नहुने भएपछि रोकिएको कांग्रेस स्रोतले बताएको छ ।

स्रोतका अनुसार भारतसँग सम्बन्ध सुधारको प्रयासमा रहेका देउवा तीर्थाटनको अवसर पारेर दिल्लीमा उच्चस्तरीय राजनीतिक भेटवार्ता गर्न चाहन्थे । प्रधानमन्त्री नरेन्द्र मोदी, सुरक्षा सल्लाहकार अजित डोभाल, विदेशमन्त्री एस. जयशंकर र उत्तर प्रदेशका मुख्यमन्त्री योगी आदित्यनाथमध्ये एक जनासँग भेट्ने प्रयास थियो । त्यसनिम्ति विभिन्न कूटनीतिक च्यानलमार्फत संवाद अघि बढाईयो । तर, चारै जनाले भेट नदिने भएपछि अन्तिम क्षणमा भ्रमण रोकिएको स्रोतको भनाई छ ।

'पहिला उनीहरूसँग समय मिलाएर मात्र कार्यक्रम सार्वजनिक गर्नुपर्थ्यो । तर, कार्यक्रम सार्वजनिक गरेर बल्ल विभिन्न च्यानलमार्फत भेटवार्ताको प्रयास गरे', समाचार स्रोतले सुनायो, 'कुनै पनि च्यानलले समय दिन नमानेपछि एयरपोर्टका लागि निस्कने बेला रोकिनुपर्‍यो ।' ओलीको दूत बनेर दिल्ली पुगेकी आरजुलाई भेटेवापत राम माधवसँग बिजेपीले स्पष्टिकरण मागेको थियो । जबकि एनजिओ चलाएर बसेका उनी पार्टीको ठोस जिम्मेवारीमा थिएनन् । देउवाको हकमा त्यो तहका नेताले समेत भेट्न इच्छा नदेखाएको बुझिएको छ ।

नेपालका राजनीतिक पार्टीहरूमा कांग्रेसलाई भारतनिकट मानिन्छ । बिजेपी र काँग्रेसबीच असल पार्टीगत सम्बन्ध पनि रहँदै आएको छ । अर्कोतिर देउवा परिवारसँग बिजेपीको विशेष र छुट्टै सम्बन्ध रहेको बेलाबखत चर्चासमेत हुने गर्छ । देउवा प्रधानमन्त्री भएका बेला आरजुले तत्कालीन विदेश विभाग प्रमुख डा. विजय चौथाइवालेलाई जनै पूर्णिमाको दिन बालुवाटारमा राखी बाँधेर राजनीतिक सम्बन्धलाई थप कसिलो बनाएको भनिन्थ्यो । तर, यो घटनासँगै ओलीको सत्ता जोगाउन काँध थापेका देउवाप्रति भारतले भरोशा गर्न छोडेको विश्लेषकहरूको टिप्पणी छ ।

एयरपोर्ट जानेबेला भ्रमण रद्ध भएको विषयलाई शेरबहादुर र आरजुको कूटनीतिक असफलता भन्दै कांग्रेसका एकथरी नेताले पार्टीमा छलफलको माग गरेका छन् । महामन्त्री गगन थापा काठमाडौं फर्किएपछि यसबारे मज्जैसँग कुरा उठाउने एकजना पूर्वपदाधिकारीले दावी गरे । 'पहिला श्रीमतीलाई भेट दिएन, अहिले श्रीमानलाई पनि त्यसै गरियो । श्रीमतीलाई नदिएकोमा त ल परराष्ट्रमन्त्रीलाई दिएन, यस्तै हो भनौंला । काँग्रेस सभापतिका रुपमा देउवालाई भेट नदिएको विषय गम्भीर छ', उनी भन्छन्, 'यो उहाँहरूको कूटनीतिक विफलता हो, यसबारे पार्टीमा छलफल हुनुपर्छ ।' त्यसो त देउवालाई दिल्ली नगैनहुने हतारो पनि होइन । सहमतिअनुसार आलोपालोको प्रधानमन्त्री बन्न डेढ वर्ष बाँकी नै छ । भारतीय रिसाए पनि त्यतिञ्जेलको तुष ओलीसँगै रहने हो ।

समाचार स्रोतका अनुसार देउवाले पनि सिधै मोदी भेट्नकै लागि दिल्ली जान लागे जस्तो नदेखिने गरी यात्रा योजना बनाएका थिए । कुम्भ मेलामा नुहाउन प्रयागराज जाने र त्यसपछि उपचारको बहानामा दिल्ली पुग्ने योजना थियो । तर, मोदीको सचिवालयले हाल संसद चलिरहेको र दिल्लीको नयाँ मुख्यमन्त्रीलाई शपथ ग्रहण गराउने लगायतका समारोहहरूमा सहभागी बन्न जाने जस्ता बहाना बनाएर अहिले भेट्न नभ्याउने जानकारी दियो । दिल्लीको योजनाबारे जानकार स्रोत बताउँछ, आरजुलाई भेट दिइरहेकै अवस्था हो । त्यसो हुँदा देउवालाई भेट्न नचाहने भन्ने कुरै आउँदैन । बरु सत्य के हो भने अहिले देउवासँग छलफल नै गरिहाल्नुपर्ने कुनै एजेण्डा दिल्लीसँग छैन । त्यसैले उपयुक्त बहाना देखाएर समय नमिलेको जनाउ दिइएको हो ।' देउवाको भ्रमणबारे दिल्लीको बुझाई प्रष्ट छ । उताकाहरू भन्छन्, 'हामीले कुरा बुझेका छौं । देउवा धार्मिक व्यक्ति होइनन् र प्रयागराजमा कुम्भ स्नान गर्न आउन चाहेका पनि होइनन् । न त स्वास्थ्य उपचारका लागि आउनुपर्ने गरी कुनै गम्भीर समस्या नै देखिएको छ । त्यसैले समय मिलाएर चाँडै खबर गर्ने वाचा गरेका छौं ।' उनी धार्मीक यात्राको कभरमा दिल्ली जान चाहेको भारतीयहरूले बुझेका छन् ।

जानकारहरू भन्छन्, 'अहिले भारत केपी ओलीले शान्त र सौंहार्द्र वातावरणमा देउवालाई सत्ता हस्तान्तरण गर्ने दिनको प्रतिक्षामा छ । त्यसो त देउवाले पनि ओलीलाई सबै कुरामा साथ दिएकै छन् । ओलीले ल्याएका अध्यादेशको समर्थनमा देउवा किन आएका हुन् भने यदि राम्रो भए गठबन्धन सरकारले गरेको भन्न पाइन्छ भने बिग्रिएको जति प्रधानमन्त्री र उनकै दलको थाप्लोमा हाल्न पाइन्छ । त्यसबाहेक आफूलाई सबै कुरामा साथ दिएका देउवालाई धोका दिन ओलीलाई समेत नैतिकरूपमा गाह्रो पर्छ । यसरी देउवा अहिले रणनीनतिक पाइला चालिरहेका छन् । देउवा निकट एक नेताले बताएअनुसार हाल उनको बुझाइ कस्तो छ भने प्रचण्डले जति नै फुइँ लगाए पनि आम जनता माओवादीसँग रुष्ट छन् । प्रधानमन्त्री ओली र उनको दलको शाख दिनप्रतिदिन घट्दो छ । त्यसैले माहौल आफ्नो पक्षमा रहेको निश्कर्षमा देउवा रहेका छन् । त्यसबाहेक हिन्दू राष्ट्रका पक्षधर र राजावादीहरू समेत माओवादीलाई देखी सहँदैनन् । उनीहरूले कांग्रेस र एमालेमध्ये एक रोज्नु पर्दा सहयात्राको लागि कांग्रेसलाई नै खोज्छन् ।

समाचार स्रोतका अनुसार 'तपाईंले सभापतिको विकल्प दिनु भएन । हामीलाई बेसहारा छोड्नु भो ।' भन्ने गुनासो बोकेर देउवा निवास पुगेका प्रकाशमान सिंह, प्रकाश शरण महत, मोहनबहादुर बस्नेत लगायतलाई देउवाले निकै क्याल्कुलेटिभ जवाफ दिएका थिए- 'यदि तपाईंहरू अबको सभापति शेखर कोइराला नबनुन् भन्ने चाहनुहुन्छ भने उनलाई कसरी कमजोर पार्न सकिन्छ त्यतातिर सोच्नुस् ।' देउवाले शेखर क्याम्पबाट गगन थापालाई निकालेर कोइरालालाई कमजोर पार्ने युक्ति सिकाएपछि अहिले गगनलाई देउवासँग निकटस्थहरूले समेत सँगै लिएर हिंड्ने र देउवाको पकेट क्षेत्रमा समेत उनलाई पहुँच दिने गरिरहेका छन् । देउवाको सिधा सुझाव थियो - तिमीहरू अहिले वैकल्पिक सभापतिको चिन्ता छाडेर शेखर कता जाँदैछन् के गर्दैछन् त्यो बारे पनि सोधखोज नगरी बसे हुन्छ । सोच्ने भनेको शेखरलाई कसरी कमजोर पार्न सकिन्छ भन्ने बारे मात्र हो । उनलाई जिल्ला जिल्ला घुम्न र मन लागेको बोल्न छोडिदिनु पर्छ भन्ने देउवाको सुझाव थियो । त्यसैले देउवाले गगनको सार्वजनिक रूपमा प्रशंशासमेत गर्न थालेका छन् । त्यतिमात्र होइन अहिले गगन शेरबहादुरको बलियो प्रभाव रहेको सुर्खेतलगायतका क्षेत्रमा पुगिरहेका छन् । त्यसो त गगनको पनि पछिल्लो दिनमा 'टोन चेञ्ज' भएको छ । उनी यो गठबन्धन पुरै कार्यकालभर चल्छ भनेर ठोकुवा गर्दै हिँडिरहेका छन् । एमालेप्रतिको कडा प्रहार पनि रोकिएको छ । उनले आफ्नो प्रहारको केन्द्र माओवादीलाई बनाएका छन् । गगनसँग तालमेल मिलाउनको लागि गुरु घिमिरेलगायतका युवा नेतासमेत देउवाबाट परिचालित बनेको अवस्था छ ।

गगन थापाले के कुरा बुझेका छन् भने यदि देउवालाई प्रधानमन्त्री नबनाइकन अधिवेशन गरियो भने फेरि पनि उनी पार्टी सभापति बन्नेछन् । त्यसैले पहिले शेरबहादुरलाई प्रधानमन्त्री बनाउने र त्यसपछि आफू सभापति बन्ने योजना छ । उता शेरबहादुर देउवा प्रधानमन्त्री बन्नुअघि नै महाधिवेशन गर्ने योजनामा छन् । कथमकदाचित गठबन्धन तोड्नुपर्ने अवस्था आयो भने पनि पार्टी सभापति त कम्तीमा आफैसँग रहन्छ भनेर अर्ली महाधिवेशनको समेत सोचमा अघि बढिरहेको बताइन्छ । यदि गठबन्धन परिवर्तन गरिहाल्नुपर्ने अवस्था आएमा पनि प्रचण्डलाई प्रयोग गरेर आफू सजिलै प्रधानमन्त्री बन्न सकिन्छ भन्ने कुरामा देउवा ढुक्क देखिन्छन् ।

समाचार स्रोतका अनुसार देउवाले पनि सिधै मोदी भेट्नकै लागि दिल्ली जान लागे जस्तो नदेखिने गरी यात्रा योजना बनाएका थिए । कुम्भ मेलामा नुहाउन प्रयागराज जाने र त्यसपछि उपचारको बहानामा दिल्ली पुग्ने योजना थियो । तर, मोदीको सचिवालयले हाल संसद चलिरहेको र दिल्लीको नयाँ मुख्यमन्त्रीलाई शपथ ग्रहण गराउने लगायतका समारोहहरूमा सहभागी बन्न जाने जस्ता बहाना बनाएर अहिले भेट्न नभ्याउने जानकारी दियो । दिल्लीको योजनाबारे जानकार स्रोत बताउँछ, आरजुलाई भेट दिइरहेकै अवस्था हो । त्यसो हुँदा देउवालाई भेट्न नचाहने भन्ने कुरै आउँदैन । बरु सत्य के हो भने अहिले देउवासँग छलफल नै गरिहाल्नुपर्ने कुनै एजेण्डा दिल्लीसँग छैन । त्यसैले उपयुक्त बहाना देखाएर समय नमिलेको जनाउ दिइएको हो ।'











## शुक्रबारको...

सङ्गै बसेको प्रारम्भिक अनुसन्धानबाट खुलेको छ। स्रोत भन्छ, 'शुक्रबारको तालिम सकेर सन्तोषी बाहिर गएकी र शनिबार मात्र फर्केकी थिइन्। भेटका क्रममा जोशीले महतोलाई केही कुरा ढाँटेको हुनुपर्छ।' जोशी सुदूर पश्चिमका स्थायी बासिन्दा हुन् भने मृतक महत सिन्धुपाल्चोककी।

यता प्रेम सम्बन्धमा रहेका दुबै जनाको अरुसङ्गको अन्तरङ्ग सम्बन्ध पनि केलाउन थालिएको छ। जिप्रका, कास्कीस्थित स्रोत भन्छ, 'अरु केटा- केटीसमेत अनुसन्धानमा तानिएलान् जस्तो छ।' मृतक युवती र आरोपित जोशी दुबै अविवाहित हुन्। हालसम्म सुसाइड नोट फेला नपरेको तर दुबै जनाको ल्यापटप र कम्प्युटर प्रहरीले कब्जामा लिएको छ। ०७२ सालमा महतले सिपाहीमा खुल्ला प्रतिस्पर्धाबाट सेवा प्रवेश गरेर खुल्लाबाटै ०७८ मा असई हुँदै यसै सालदेखि इन्सपेक्टरमा नाम निकालेकी थिइन्। एउटा सामान्य कर्मचारीलाई राज्यले पाइला पाइलामा तालिमका लागि धेरै खर्चेर दक्ष जनशक्ति बनाएको हुन्छ र त्यसमा प्रशिक्षकहरूको ठूलो भूमिका रहन्छ। १० वर्षअघि इन्सपेक्टरको यस्तै तालिममा लामपाटनमै एक जना डुबेर मरेका थिए भने त्यहींका एसएसपी राजेन्द्र अधिकारी ०७७ असारमा चितवनबाट स्कुटर चढेर भेट्न गएकी २७ बर्षिया 'भाञ्जी' सँग विशेष सम्बन्धको विवाद बाहिर आएपछि जेल गएका र जागिरबाट निकालिएका थिए। उनी पूर्व एआइजी सुवोध अधिकारीका भाइ हुन्।

यसअघि ककनीको तालिमबाट मोटरसाइकलमा काठमाडौं आउँदै गरेका दुई जना बाटैमा बिते। उक्त तालिमका कमाण्डर राजेन्द्र खड्का अझै त्यहीँ छन्। चार महिनाअघि बाँकेको नौबस्तामा आयोजित तालिममा सहभागी एक जनाको पनि यस्तै दुःखद निधन भयो। संगठनमा आत्महत्याको क्रम बढेपछि एक वर्षदेखि आइजिपी राजु अर्यालले डिएसपी संगम श्रेष्ठको टिमलाई काउन्सिलिंगमा खटाए। जसले गर्दा पछिल्लो नौ महिनामा उक्त फौजभित्र आत्महत्याको दर शून्य रहन गएको थियो। तर, प्रेममा चुर्लुम्म डुबेकाहरूको हकमा घात प्रतिघातको कुरा तेर्सिंदा काउन्सिलिंगले खासै असर नगर्ने छानबिन समितिका एक सदस्यले बताए।

## सिक्किमबाट...

छानबिन प्रक्रिया अघि बढाउने भएपछि मोसो दल्नेमध्ये केही समातिए भने एकजना चाहिँ फुत्किएर सिक्किम पुगे। विष्णु फामदेन, सुमिन चेम्जोङ, जन्टिल लावतीहरूले मोसो दलेको र विष्णुचाहिँ लुक्नैको लागि सिक्किम पुगेको स्रोतको दाबी छ। यता केबलकारको विरोधमा आन्दोलन चर्काउन उनले गाङतोकबाटै पोष्ट गरेको फेसबुक स्टाटस यताका नातेदार तथा अरुले शेयर गरेपछि विष्णुको लोकेसनका आधारमा सेनाले सिक्किमबाट घुसपैठ भइरहेको रिपोर्ट तयार पारेको अनुमान छ। विष्णुको फेसबुक स्टाटसकै कारण पनि शनिबार साँझ ताप्लेजुङ सदरमुकाममा भिडन्त निम्त्याएको निचोड निकालिएको छ।

## मुद्दा...

शर्मा ओलीले सर्वोच्च अदालतमा दायर गरेको रिट फिर्ता लिनुपर्ने कठोर शर्त एसपिएलएको तर्फबाट राखिएको बुझिएको छ। तीन वर्षदेखि सर्वोच्च अदालतमा विचाराधीन सो मुद्दा आगामी चैतमा पेशी तोकिएकाले त्यसअघि नै फिर्ता नभए बारको चुनावमा कांग्रेससँग मिलेर एमालेलाई 'देखाइदिने' एसको काउन्टर रणनीति देखिन्छ। शेरबहादुर देउवा नेतृत्वको तत्कालीन सरकारले राजनीतिक दलसम्बन्धी ऐनलाई अध्यादेशमार्फत संशोधन गरी केन्द्रीय समिति वा संसदीय दलमा २० प्रतिशत सदस्य पुर्‍याई पार्टी विभाजन गर्न पाइने प्रावधान ल्याएपछि २०७८ भदौ ९ गते माधव नेपालको नेतृत्वमा एकीकृत समाजवादी दल दर्ता भएको थियो। आफ्नो पार्टीले कारबाही गरिसकेका सांसदलाई सनाखत गराएर पार्टी फुटाईएको जिकिर गर्दै त्यसविरुद्ध ओलीका तर्फबाट भदौ १७ गते सर्वोच्चमा रिट दर्ता भयो। विभाजित पार्टीको वैधानिकता बदर गर्न माग गरिएको रिटमा प्रारम्भिक सुनुवाई गर्दै भदौ २२ गते सर्वोच्चले अन्तरिम आदेश दिन अस्वीकार गरे पनि मुद्दा टुंगो लागेको छैन।

यो पृष्ठभूमिमा सर्वोच्च बार र बार काउन्सिलमा तालमेल गरेका कांग्रेस र एकीकृत समाजवादीबीच केन्द्रीय बारमा पनि मिलेर जाने भित्री सल्लाह छ। एमाले भने माओवादी र एकीकृत समाजवादीको साथ लिएर बारमा कांग्रेसको किल्ला भत्काउने अभियानमा छ। मुद्दा फिर्ता गर्नुपर्ने एसपिएलएको शर्तमा पिपिएलएका अध्यक्ष भोजराज आचार्यले तत्कालै मञ्जुरी जनाएको अवस्थाले पनि बारको चुनावलाई पिपिएलएले प्रतिष्ठाको विषय बनाएको बुझिन्छ।

फागुन ८ गते बिहीबार अनामनगरको किम्छी रेष्टुरेन्टमा एमाले, माओवादी केन्द्र, एकीकृत समाजवादी, जनमोर्चा, नेमकिपा, विप्लव, बैद्यसहित वामपन्थी दलनिकट कानुन व्यवसायीहरूको भेला बोलाइएको थियो। सो जमघटमा पिपिएलका अध्यक्ष भोजराज आचार्य, एसपिएलका अध्यक्ष डेकेन्द्र सुवेदी, बारका पूर्व अध्यक्ष शम्भु थापा, पूर्व महान्यायाधिवक्ता रमण श्रेष्ठलगायत उपस्थित थिए। छलफलका क्रमम पिपिएलएका अध्यक्ष आचार्यले वामपन्थी तालमेलमा जोड दिँदै पदीय बाँडफाँडको प्रस्तावसमेत अघि सारेका थिए। तर, एसपिएलएका अध्यक्ष सुवेदीले मुद्दा फिर्ता नभएसम्म एमालेसँग मिलेर जान नसकिने बटमलाइन सुनाए।

'मुद्दा फिर्ता भएपछि बल्ल वार्ताको वातावरण बन्छ, त्यसपछि तालमेल र सिट बाँडफाँडबारे छलफल गरौँला', शर्त राख्दै उनले भने, 'हामीलाई निषेध गर्ने, मुद्दा खेप्नुपर्ने अनि मिलेर जाँदा परिणाम कस्तो आउला !' सुवेदीको शर्तमा कसैको पनि बिमति रहेन। पिपिएलएका तर्फबाट पनि मुद्दाको औचित्यसमेत सकिएकाले विकल्प खोज्ने प्रतिवद्धता व्यक्त भयो। अधिवक्तासमेत रहेका आचार्यले बहस गर्दा त्यसबारे इजलासमै बोल्ने विश्वाससमेत दिलाएका थिए।

तर, ओलीको नामबाट रिट दायर भएकाले उनले सहिछाप नगरिकन मुद्दा फिर्ता हुँदैन। समाचार स्रोतका अनुसार मुद्दा फिर्ताबारे निर्णय गराउन सोही दिन बिहान दुबै संगठनका अध्यक्षले महान्यायाधिवक्ता रमेश बडालसँग गोप्य छलफलसमेत गरेका थिए। बडालले 'केपी ओलीले मान्दैनन्, तलैबाट मिलाउनुपर्छ' भने पनि एकीकृत समाजवादी विश्वस्त भैसकेको छैन। लामो समयदेखि डेमोक्रयाटहरूको एकछत्र बर्चस्व रहँदै आएको नेपाल बारमा वामपन्थीहरू मिल्दा डिएलएलाई चुनाव जित्न कठिन छ। वामपन्थी विभाजनको लाभ उठाइरहेको काँग्रेस यसपटक पनि एकीकृत समाजवादीलाई साथमा लिएर अध्यक्ष जित्ने गृहकार्यमा लागिसकेको छ। अघिल्लोचोटि माओवादीको समर्थन पाएका डिपिएलएका उम्मेदवार गोपालकृष्ण घिमिरेले निकटतम प्रतिद्वन्द्वी पिपिएलएका विष्णुमणि अधिकारीको भन्दा २ हजार बढी मतले अध्यक्ष जितेका थिए। त्यसबेला माओवादीलाई महासचिव दिएको कांग्रेसले बाँकी मुख्य पद आफैंसँग राखेको थियो। बारको आगामी निर्वाचनमा डिएलएबाट यदु खनाल अध्यक्षमा उठ्ने चर्चा छ। पिपिएलएबाट अधिवक्ता टिकाराम भट्टराई र महेश नेपालको नाम आइरहेको छ। महेश काठमाडौं महानगरका मेयर बालेन्द्र (बालेन) साहको कानुनी सल्लाहकारसमेत हुन्। माओवादी केन्द्रको आरपिएलएले पूर्व महान्यायाधिवक्ता रमण श्रेष्ठलाई अघि सार्ने सम्भावना छ भनिन्छ।

## माओवादी...

केही समयमा रकम फिर्ता गर्छु भन्नुभएको छ। गर्नुभएन भने कानुनी प्रक्रियामा जान्छु। यत्तिका समय भइसक्यो, मैले त साथी भनेर पो दिएको !' उनीबाट ठगिने अर्का पात्र हुन्, स्थानीय भीमसेन डाँगी। उनले सामाजिक सञ्जालमार्फत आफ्नो वेदना पोखेका छन्।

भीमसेन कुनै समय रंगको कारोबार गर्थे। कारोबार एकदमै राम्रो चलिरहेको थियो। तर, दुई वर्षदेखि पैसाकै लागि भौंतारिरहेका छन्। आफ्नै व्यवसायमा रमाइरहेका उनलाई तुकमानले अमेरिका पठाउने सुनौंलो सपना देखाए। नेताको छोराले भनेपछि नपत्याउने कुरै भएन। रोल्पाको सुनिल स्मृति गाउँपालिका अध्यक्षमा उठ्न आतुर तुकमानले एक सातामै अमेरिका पठाइदिने र त्यसका लागि २० लाख रुपैयाँ लाग्ने बताएका थिए। हतारोमा पैसा मागेपछि भीमसेनले अघिल्लो वर्षको भदौ १५ र १६ गते १०-१० लाख गरेर २० लाख रुपैयाँ बुझाए। ऋण काढेर बुझाएका उनले अमेरिका जाने भएपछि चलिरहेको पसल बेचे।

तुकमानले फोन गरेर भिसा आएको र अमेरिका उड्ने तयारी थाल्नु भनेपछि काठमाडौं आए। भीमसेनका अनुसार, उनले श्रम मन्त्रालयका एक कर्मचारीलाई भेट्न भनेका थिए। त्यहाँ पुगेपछि झसंग भए। ती कर्मचारीले उनी ठगिएको बताए। उनले पटकपटक तुकमानलाई सम्पर्क गरे। तर, फोन उठेन। त्यसपछि गाउँ फर्किएका उनले तुकमानले धेरैलाई ठगेको जानकारी पाए। आफू कानुनी प्रक्रियामा जाने भनेपछि केही रकम फिर्ता पाएको बताउँछन्। अझै १७ लाख बराबर लिन बाँकी रहेको सुनाए। त्यो रकम पनि पाँच हजार-१० हजार गरेर फिर्ता दिएको भीमसेन बताउँछन्। जनआस्थासँग भने, 'मैले एकमुष्ट रकम दिएको हुँ। तर, कहिले पाँच हजार दिन्छन्, कहिले १० हजार। मलाई साह्रै समस्या भएको छ। उता ऋणको किस्ता तिर्नुपर्छ। त्यो तिर्दातिर्दै आजित भइसकें। मेरो आर्थिक अवस्था पनि डामाडोल बन्यो। त्यस्तो राम्रो चलिरहेको पसल थियो।'

सँधै आज-भोलि भन्दै झुलाएपछि उनले केही दिनअघि फेसबुकमा एउटा स्ट्याट्स लेखेरै पैसा फिर्ता मागे। लुङबहादुर महराले फोन गरेर पैसा फिर्ता माग्दा केही समय कुर्न आग्रह गरिएपछि स्ट्याट्स हटाएका छन्। तोकिएको समयमा पैसा नपाए पुनः स्ट्याट्स लेख्ने उनको चेतावनी छ। हाल काठमाडौंको टोखा बस्दै आएका तुकमानले शान्तिसेनामा पठाइदिन्छु, असईमा बढुवा गरिदिन्छु भन्दै थुप्रोसँग पैसा असुलेको बताइन्छ। तुकमानसँग यस विषयमा बुझ्न पटकपटक फोन गर्दा पनि उठाएनन्।

## एक...

सचिवालयसँग तिनले पङ्गा लिन सकेनन् र निरिह ठहरिए।

मन्त्रीको सचिवालयबाट चेपिएका निरौला पठाओ चढेर दैनिक गौरीघाट-रामशाह पथ आउजाऊ गरिरहेका छन्। उता विश्वबन्धु रेग्मी भने मन्त्रीलाई मावली नाता लगाउँदै स्वास्थ्यमा छिरेका हुन्। ०५५ सालदेखि जागिरे यात्रा शुरु गरेका उनी मकवानपुरको फर्पिङ गाउँपालिका (हाल थाहा नगरपालिका) मा कार्यरत थिए। पानी बढुवा हुँदै सुब्बा पदबाट शाखा अधिकृतमा उक्लिएका उनी स्वास्थ्य सेवा विभाग, टेकु हुँदै उद्योग विभागमा पुगे। बीचमा झण्डै झण्डै माओवादी बनेका उनले वैदेशिक रोजगार,स्वास्थ्य सेवा विभाग, उद्योग विभागजस्ता कमाउ अड्डामा बसेर स्वयम्भू नजिकै गज्जबको घर ठड्याएका छन्।

उता देशकै ठूलो र पुरानो वीर अस्पतालमा कार्यरत नवराज धिताल र बैकुण्ठ लुईंटेलको चकचकीविरुद्ध अख्तियारदेखि सतर्कता केन्द्रसम्म उजुरी परेको छ। धिताल ५ बर्षदेखि स्टोर शाखामा छन्। सहकारीका नाममा रहेको ३५ लाख बढी अपचलनमा मुछिएका छन्,यी दुई भाइ। यस्तै लिफ्टम्यान बैकुण्ठ जनरल स्टोर प्रमुख हुन्। छत्रे देउराली धादिङका बैकुण्ठले मंगलोदय माध्यमिक विद्यालय थानकोटबाट २०४८ मा एस.एल.सी उत्तिर्ण गरे। काकाबा वीर अस्पतालमा कार्यालय सहयोगी थिए। सोही समय लुइँटेलले २०५४ असार २६ मा वीर अस्पताल विकास समितिका निर्देशक डा. माधव दाहाललाई लिफ्ट असिस्टेन्टमा म्यादी नियुक्ति पाऊँ भनी निवेदन (दर्ता नं ४५९५) का आधारमा ज्यालादारीबाट काम थालेका हुन्। धिताल र लुइँटेलले अस्पताल क्यान्टिन (गुजेश्वरी होटल), गार्ड (के फोर्स) र सरसफाइको टेण्डर स्वीकृत गराउँदा अनियमितता गरेको भन्दै अख्तियारदेखि सतर्कता केन्द्रसम्म गुहारिएको छ।

## नेपाल...

उनकी आमालाई समेत अश्लील गाली गरेको पाइयो। मृतकका पिता सुनिल लम्सालका अनुसार आरोपित व्यक्तिले छोरीलाई निरन्तर भावनात्मक ब्ल्याकमेलिङ गर्दै आएका थिए। कलेजका कर्मचारी र सुरक्षागार्डले नेपाली छात्राहरूमाथि कुटपिट गरेको भिडियो नै सार्वजनिक भयो, यसबाट स्थिति झन् तनावपूर्ण बन्यो। घटनाले उग्ररुप लिनुमा कलेज प्रशासनले नरम व्यवहार नदेखाउनु र प्रहरीले तत्काल स्थितिलाई नियन्त्रणमा लिन नसक्नु पनि कारण थियो। नेपाली विद्यार्थीलाई कलेज छाड्ने आदेशले क्रोध बढायो। काठमाडौंलगायत सम्पूर्ण नेपाललाई ततायो। यता, भारत सरकार लज्जित बनेर मुख्यमन्त्रीलाई कारवाही गर्न अघि सर्‍यो।

यो घटनाका कारण नेपाल र भारतीयमाझ निकै शाख कमाएको केआइआइटी कलेज बर्वाद हुने स्थितिमा पुगेको छ। यो दक्षिण एशियामै कहलिएको कलेज हो। यसले पोखरा विश्वविद्यालयसँग समेत सम्झौता (एमओयु) गरेको छ। कलेजका ४० हजार विद्यार्थीमध्ये १ हजारभन्दा बढी नेपाली छन्। नेपाली विद्यार्थीले केआइआइटी कलेजलाई मन पराउनुको कारण यहाँ गुणस्तरको पढाइ हुनु र शुल्क चित्तबुझ्दो हुनु पनि हो। यहाँको पढाइपश्चात नोकरी पाउन सजिलो छ, दुवै देशका जनताको संस्कृति मिलेकाले पनि नेपालीहरूले अन्यत्रभन्दा यहाँ सहज महसुस गर्ने गर्दथे। विद्यार्थीबाहेक पनि हिन्दू नेपालीहरू यहींको भुवनेश्वर, जगन्नाथ पुरीमा आउने जाने गरिराख्छन्। नेपालीहरूका लागि यो धार्मिक पर्यटनको केन्द्र पनि हो। तर, यो घटनाले यहाँको धार्मिक पर्यटनलाई समेत नराम्रो असर पारिसकेको छ। मृतकले आफूमाथि भैरहेको उत्पीडनलाई लिएर ५ हप्ताअगाडि नै कलेज प्रशासनमा निवेदन दिँदा पनि वास्ता नगरी बसेका वरिष्ठ प्रशासकलाई निलम्बन गरिसकिएको छ। दोषी छात्रविरुद्ध आपराधिक मुद्दा दायर भइसकेको छ। उनलाई १४ दिन हिरासतमा राखी छानबिन अघि बढाउने निर्णय भएको छ। दुइटा मुद्दा दायर गरिएको छ। उडिसाको विधानसभामा विपक्षी बिजु जनता दलले सत्तारुढ दलमाथि कानून फितलो पार्दै लगेको आरोप लगाएको छ। बिजेपी सांसद टंकधर त्रिपाठीले जवाफी प्रहार गर्दै बिजु जनता दलले केआईआईटीका संस्थापक, सत्तारुढ दलका पूर्व सांसदलाई बढावा दिएको आरोप लगाएका छन्। केआईआईटीका संस्थापक श्री अच्युत्य सामन्त बिजु जनता दलका सांसद हुन्।

## भङ्ग...

कालाबजारी नियन्त्रणसँग सम्बन्धित ऐन खारेज र कालाबजारी भइरहेको अनुगमन गर्ने सरकारी संरचना नै भंग गर्ने सुझाव सो प्रतिवेदनमा समेटिएको छ।

कालोबजारी नियन्त्रणसँग सम्बन्धित नियमको हकमा भने सरकारी डण्डा देखाएर व्यक्तिहरूले विभिन्न व्यवसायीसँग आर्थिक संकलन गर्ने बाटो बनाएको आयोगको ठहर छ। उनीहरूले उदाहरणको रूपमा के भन्ने गरेका छन् भने कालाबजारी नियन्त्रण ऐनले दिएको अधिकारलाई प्रयोग गरेर पाँचतारे होटलमा गई 'किन २० रुपैयाँको पानीलाई १०० रुपैयाँ लिएको' भन्दै पैसा असुल्ने कामले कालाबजारी नियन्त्रणमा खासै फरक पार्दैन। सर्वसाधारणको हकरक्षामा सो ऐनअन्तर्गत क्रियाशील व्यक्ति नलागेको ठहर पनि कार्यदलको छ। त्यसैले कालाबजारी नियन्त्रणसँग सम्बन्धित ऐनले समेटेकै कुरा उपभोक्ता हक संरक्षण ऐन र प्रतिस्पर्धा ऐनमा समेटिएका हुनाले पनि कालाबजारी नियन्त्रण ऐनअन्तर्गत रहेको संरचनाले राज्यको आर्थिक भार मात्र थपेको तर राजस्व संकलनमा खासै योगदान गर्न नसकेको भन्दै प्रधानमन्त्री कार्यालयअन्तर्गत राजश्व अनुसन्धान विभाग नै खारेज हुनुपर्ने कार्यदलले निश्कर्ष निकालेको हो।

सो प्रतिवेदनमा समेटिएको अर्को महत्वपूर्ण सुझाव हो, राजनीतिक दलले चन्दा उठाउन पाउने अवस्थालाई रोक्न गरिएको सिफारिस। दलले चुनावको बहानामा चन्दा उठाउने गर्दै आएको कारण भ्रष्टाचारमा वृद्धि भएको निश्कर्ष छ। तर्क के छ भने नेताले चुनाव जित्न आवश्यक खर्च जुटाउन पहिले चन्दा लिने र पछि चन्दा लिएका व्यक्तिहरूको स्वार्थबमोजिम नीतिगत निर्णयहरू गर्ने गरेकै कारण भ्रष्टाचार नियन्त्रणभन्दा बाहिर गएको हो। बरु, त्यसको सट्टा सरकारले दलहरूको आकार र प्रभावको आधारमा खर्च व्यवस्थापन गरिदिनुपर्ने सुझाव प्रतिवेदनमा समेटिएको छ। त्यसो गर्दा विभिन्न स्वार्थ समूहबाट वा व्यवसायीबाट पैसा लिएर उनीहरूको इशारामा चल्नुपर्ने बाध्यताबाट दलका नेता बाहिर निस्कन सक्ने स्थितिले सुशासनको सुनिश्चितता गराउनेछ।

## तीन...

छ तर यदि चाहने हो भने केही कानुनी र व्यावहारिक सुधारमार्फत छिट्टै त्यो सूचीबाट हट्न सकिनेछ। एउटा संयोग के छ भने नेपाल र लाओस सन् २०२६ देखि अतिकम विकसित मुलुकबाट विकासशील मुलुकमा स्तरोन्नति हुँदैछन्। अहिले एकपटक मात्र सम्पत्ति शुद्धिकरणको दृष्टिबाट दुवै मुलुक कमजोर ठहर भएका हुन्। त्यसो त फिलिपिन्स यही बैठकदेखि ग्रे लिष्टबाट बाहिर आएको छ। नेपाल र लाओस भने प्राप्त एक वर्षे ग्रेस पिरियडमा समेत उल्लेख्य काम नगरेका कारण यस्तो सूचिमा परेका हुन्। कम्बोडिया, सेनेगलसमेत केही समयअघि मात्रै यो सूचीबाट बाहिर आउन सफल भएका थिए। त्यसो त नेपाललाई यो संयन्त्रले विशेष मायासमेत गरेको थियो। त्यसैले निकै ढिलो गरी मात्रै मूल्यांकन गरियो। दक्षिण अफ्रिका, टर्की, नाइजेरिया, भियतनामजस्ता मुलुक सेकिँदै आए पनि संक्रमणकालिन अवस्थाबाट भर्खरै बाहिर निस्किएको भन्दै २००२ मा बल्ल सदस्यता लिएको नेपाललाई सम्हालिन समयको यस्तो छुट दिइएको थियो। समाचार स्रोतका अनुसार यसअघि समेत नेपाल ग्रे लिष्टमा परेको थियो तर त्यो बेला कसैले हल्ला नगरेको कारण उतिसारो चर्चा भएन।

नेपाललाई ग्रे लिष्टबाट हट्न वित्तीय क्षेत्रका उच्च जोखिमयुक्त क्षेत्रको मूल्यांकन र पहिचान गर्न निर्देशन दिइएको छ। त्यसैगरी, क्यासिनो, घरजग्गा व्यवसाय, सहकारीलगायत आर्थिक कारोबार गर्ने गैरबैंकिङ वित्तीय संस्थाको नियमन गर्नसमेत भनिएको छ।

एक वर्षमा तीनचोटि यस्ता मिटिङ हुने गर्छ। तीन महिनापछि फ्रान्समा बैठक बस्दा आफ्ना कमजोरी सुधारिसक्ने अवसर पनि उपलब्ध छ तर के हामी त्यति फुर्तिला छौं ?

## सालीलाई...

नै संशोधन गरिएको आशंका छ। संघीय सचिवालय निर्माण तथा व्यवस्थापन कार्यालयले गत पुस ५ गते सूचना जारी गरेर माघ ६ गतेसम्म फ्लडलाइट जडानसम्बन्धी बोलपत्र पेश गर्न भनेको थियो। पेश गरिएका बोलपत्र प्रस्तावमध्ये कूल ५ वटाको प्राविधिक प्रस्ताव सारभूत रूपमा प्रभावग्राही रहेको पाइएको भन्दै माघ २५ गते आर्थिक प्रस्ताव खोल्ने भनेर उक्त कार्यालयले माघ १८ गते अर्को सूचना निकाल्यो। प्राविधिक मूल्यांकनमा सूर्योदय ऊर्जा-रोशन जेभी, रेलिगेयर कन्स्ट्रक्सन प्रालि, भिशान-ईश्वरी जेभी, उमा एण्ड कम्पनी प्रालि र गीताञ्जली-कार्की बन्धु जेभी छनोट भए।

स्रोतले दिएको जानकारीअनुसार सूर्योदय ऊर्जा-रोशन जेभीले ६१ करोड ८३ लाख २२ हजार रूपैयाँ, रेलिगेयर कन्स्ट्रक्सन प्रालिले ५० करोड १३ लाख ४९ हजार रूपैयाँ, भिशान-ईश्वरी जेभीले ४७ करोड ३७ लाख रूपैयाँ, उमा एण्ड कम्पनी प्रालिले ६० करोड ४२ लाख रूपैयाँ र गीताञ्जली-कार्की बन्धु जेभीले ४७ करोड ४३ लाख रूपैयाँ प्रस्ताव गरेका छन्। जसमा सबैभन्दा कम भिशान-ईश्वरी जेभीले ठेक्का हालेको छ। सार्वजनिक खरिद ऐनअनुसार ठेक्का उसैले पाउने निश्चित छ। अहिले ६२ करोडको ठेक्का प्रक्रिया अगाडि बढाउँदा झण्डै २५ करोड रूपैयाँसम्म आपूर्तिकर्तालाई पोस्न खोजिएको भेटिएको छ।

उसो त केही अघिमात्र परराष्ट्रमार्फत अगाडि बढेको टेण्डर प्रक्रियामा समेत सार्वजनिक खरिद अनुगमन कार्यालयलाई गुहारिएको छ। पासपोर्ट छपाइमा फ्रान्सेली कम्पनीलाई नै टेण्डर दिन खोजिएको अर्को उजुरी छ। राहदानी विभागले मंसिर १३ गते पासपोर्ट छपाइको लागि टेण्डर आह्वान गरेको थियो। तर त्यसमा फ्रान्सेली कम्पनी आइडेमियालाई सहज हुने गरी शर्त राखिएको भन्दै सार्वजनिक खरिद अनुगमनको कार्यालय केशरमहलमा उजुरी परेको थियो। उक्त उजुरीपछि कार्यालयले ठेक्का प्रक्रिया संशोधन गर्न पत्र काटेको छ। मन्त्रीको 'एसम्यान' बन्दा प्रशासकहरू कसरी फस्छन् भन्ने एउटा जल्दोबल्दो उदाहरण हुन्- टेकनारायण पाण्डे, जो नक्कली भुटानी शरणार्थी प्रकरणमा मुछिएर सोमबार कारागारबाटै अनिवार्य अवकाशमा गएका छन्। अहिलेको सिञ्चाइ सचिव दवाडी झैं, उर्जा सचिव सुरेश आचार्यसमेत मन्त्री खड्काको एसम्यान बन्दा निजामती क्षेत्र नै 'कलंकित' बन्न पुगेको टिप्पणी हुँदैछ।

## अमेरिकामै...

फरक दुई विषयमा पिएचडी हासिल गरेको, मदर टेरेसासँग एक दशकसम्म निकट रहेको खबर पनि उनैले उत्पादन गर्न भ्याएकी थिइन्।

तर, ती सबै प्रोपोगण्डा एकाध दिनमै पानीको फोकामा परिणत भए। केही वर्षदेखि भट्टराई र खड्कालाई बिर्साउने एक पात्र फेरि मिडियामा छाउन थालेका छन् जसको नाम हो-भुटानी शरणार्थीको हैसियतमा अमेरिका पुगेका डिल्ली अधिकारी, जसलाई गत महिना अमेरिकी अदालतले श्रमिकमाथि शोषण गरेबापत १५ मिलियन डलर जरिवाना तिर्न आदेश दिएको छ। एनआरएनजस्तै सँस्था खोलेर संसारभरका नेपालीलाई एकगठ बनाउने 'अभियान' मा लागेका अधिकारीले इन्ट्रा नेशनल वेलफेयर एण्ड सपोर्ट फाउण्डेशन अफ अमेरिकाका नाममा अशक्त र बृध्दहरूलाई घरैमा स्वास्थ्य सेवा उपलब्ध गराएबापत सरकारबाट प्राप्त भुक्तानी ओभरटाइम खटिएका कामदारहरूलाई नदिएको मुध्दामा अदालतले हालै उनलाई अरबौं रकम तिर्नैपर्ने ठहर सुनाएको हो।

अधिकारीलाई नजिकबाट चिन्ने बाल्टिमोरस्थित एकजना नेपाली कलाकार भन्छन्, 'एउटा फाउण्डेशन बनाएका छन्। त्यहीमार्फत् वर्षेनी नेपाली र भुटानी युवायुवती जम्मा पारेर मेरो डान्स युनिभर्स र मेरो भ्वाइस युनिभर्सका नाममा काठमाण्डौमा डान्सिङ र सिङ्गिङ रियालिटी टिभी शो गराउँछन्। विजेतालाई एक करोड र २५ लाखका दरले पुरस्कार दिने भन्छन् तर भोटिङबाटै करोडौं उठाउँछन्। जबकि उनी हुण्डी कारोबारीको रुपमा पनि परिचित छन्।' रसेन्द्र भट्टराईका उनै नयाँ सँस्करणमाथि अमेरिकी श्रम कानुन उल्लंघन गरेको आरोपमा गत जनवरी ९ का दिन त्यहाँको एउटा अदालतले ४१ पृष्ठको आदेश सुनाएको छ। श्रम विभागले दायर गरेको मुद्दामा अधिकारी दोषी ठहर भएका हुन्। सन् २०१६ मा सोही फाउण्डेशनमार्फत् सञ्चालित बृद्धबृद्धाको हेरचाह संस्था 'अमेरिकेयर' मा भएको श्रम कानुन उल्लंघनमा उनीविरुद्ध फैसला आएको हो। अमेरिकाको मिचिगन, पेन्सिलभेनिया, कोलम्बस, क्लिभल्याण्ड, सिनसिनाटी र एक्रोनका बृद्धबृद्धालाई उनीहरूकै घरमा मेडिक उपचारबाहेकका अन्य सेवा उपलब्ध गराउन खटिएका कर्मचारी तथा सहयोगीलाई ओभरटाइम काम गराएर त्यसवापतको तलब नदिएपछि उक्त विवाद अमेरिकी श्रम विभाग हुँदै अदालतसम्म पुगेको थियो।

ओहिओको दक्षिणी जिल्ला अदालतका न्यायाधीश एडमण्ड ए.सारगुस जुनियरको इजलासले अधिकारीलाई कर्मचारीको ओभरटाइमवापतको रकम ७४ लाख ७८ हजार ८२० डलर ७९ पेनीको दोब्बर १५ मिलियन डलर अर्थात नेपाली २ अर्ब ८ करोड रुपैयाँ तिर्न आदेश दिएको छ। अक्टोबर २०१९ देखि कोभिडको महामारीसमेत समेटिने गरी अप्रिल २०२४ सम्मको रकम भुक्तानीका लागि जनवरी ९ तारिखमा अदालतबाट उक्त आदेश आएको हो।

## हाकिमद्वारा...

पोको पारेर राखिएको छ। राजपरिषद्को नाममा रहेको २२ थान ब्रेचपीनको सक्कली तामाबाट सुन-चाँदी निकाली करोडौं हिनामिना गरिएको र यसमा कार्यालय प्रमुख, लेखा र स्टोरका कर्मचारीको मिलेमतो रहेको समाचार प्रकाशन भएपछि कार्यालय प्रमुख सन्तोष मोक्तानले एक तहमुनिका गणेश राउतको घाँटी समातेका हुन्। सुरक्षाकर्मी नजिकै भएका कारण त्यस दिन ठूलो घटना हुन नपाएको उक्त कार्यालयका कर्मचारीहरूले जनाएका छन्। सन्तोष बागमती प्रदेशकी उद्योगमन्त्री सुकमाया तामाङका भाञ्जा हुन्।

यता जनआस्थाले समाचार लेखेसँगै कार्यालयमा पोको पारेर राखिएका तक्माहरूको सिल खोलेर हेरिएको छ। राजपरिवारको नाममा रहेका यस्ता तक्मा बाग्मती प्रदेश मातहत पाटन औद्योगिक क्षेत्रभित्र रहेको उद्योग तथा वाणिज्य कार्यालयमा राखिँदै आएको थियो। १८९ थरी तक्माका हजारौं परिमाण ०७१ साल साउन १४ देखि त्यहाँ भण्डारण गरिएको छ। यो विषयमा समाचार पढेर बाग्मती प्रदेशका प्रमुख सचिव महादेव पन्थ नै त्यहाँ गएको बारे जिज्ञासा राख्दा आफू उक्त कार्यालयमा एक घण्टा घुमेर फर्किए पनि निरीक्षण प्रयोजनका लागि भने नगएको बताए। उनले भने, 'म पहिला गृहमा बस्दा तक्मा बनाउन यही कार्यालयलाई दिइन्थ्यो, घरेलु हुँदै अहिले प्रदेश मातहत पुगेको रहेछ। कार्यालयले अहिले के कसरी काम गरिरहेको छ जान्न मन लागेर हेर्न गएको हुँ।'

यता, कार्यालयको सूचना चुहिएपछि कार्यालय प्रमुख मोक्तानले गणेश राउतविरुद्ध सम्पत्ति शुद्धीकरण र अख्तियारमा उजुर हाल्ने चेतावनीसमेत दिएका छन्।

## कसले...

हाल परराष्ट्रमन्त्री रहेकी आरजु राणाको समेत जानकारी र भनसुनमा भएको सो घटनामा चासो देखाउने हिम्मत अहिले उनी आफैं सत्तारुढ रहेका कारण कोहीसँग छैन। अघिल्लो सेनापतिकै पालामा भएको सो घटनाको छानबिन गर्न वास्तवमा कसैलाई गाह्रो नपर्नुपर्ने हो। तर, बडो सकस परिरहेको छ। स्रोत भन्छ- यसरी सेनाको हेलिकप्टर र पौने अर्ब रकम विदेश चप्काउने बिचौलिया भने प्रशान्त राणा हुन्। यसमा सक्रिय ढंगले संलग्न हाकिम आशिषनरसिंह राणा थिए। उनी दुवैवटा मृगौलामा समस्या देखिएपछि गत हप्ता छाउनी अस्पतालबाट घर फर्केर आराम गरिरहेका छन्। नेपाली सेनाको पाइलट रहेका उनकै हस्ताक्षरमा एनए ५६ कल साइन रहेको सो हेलिकप्टर ट्रकमा हालेर मुम्बईको बन्दरगाहमा घाम तपाउन पठाउने काम भएको थियो। लगत्तै यसरी नै भारत पठाउन ठिक्क पारिएको एनए ५७ कल साइनको हेलिकप्टर भने अहिले यतै रोकिएको छ।

नेपाली सेनाको लागि इण्डोनेशियाबाट कासा जहाज किन्दाको प्रकरण पनि निकै रोचक छ। कांग्रेसको सरकार रहेका बेला सबै चाँजोपाँजो मिलाइएको थियो। जर्नेल भरत केशरीका छोरा अजय सिंह त्यसको एजेन्ट थिए। हेलिकप्टर भने त्यसबेला भित्रियो जुनबेला केपी ओली प्रधानमन्त्री थिए र स्वास्थ्य परीक्षणको लागि सिंगापुरमा रहँदा उतैबाट रक्षा मन्त्रीलाई के भएको ? त्यसमा कसले गोजी भर्‍यो ? भन्ने जस्ता प्रश्न सोधेर हैरान पारिरहन्थे। संयोगवश अहिले पनि उनै प्रधानमन्त्री छन् र रक्षामन्त्रीसमेत एमाले कार्यकर्ता नै छन्। तैपनि यति ठूलो राष्ट्रघातमा ती केही बोल्दैनन्। तराईमा हावाहुरीका कारण भत्किएका घर मर्मत, कोभिड कालको होल्डिङ सेन्टर स्थापना, चुनाव, भूकम्पको रकम परिचालनमा संलग्न शरद गिरी, भुवन अधिकारीको सम्पत्ति कसले छानविन गर्ने ? अनेकौं काण्डका दोषीलाई कसले समात्ने ? अनि ग्रे लिष्टमा परियो भनेर किन चित्त दुखाउने ?

## एमालेको...

बसौलालाई पछि पार्दै प्राधिकरणको नेतृत्व हत्याउन सफल ओझा बिचौलिया भट्ट र पशुपति मुरारकाको खास मान्छेका रुपमा परिचित छन्। पुडासैनी भने राजनीति बुझेदेखि एमालेका लागि ज्यान फालेर लागेका अनुशासित सिपाही हुन्। एमालेको औपचारिक जिम्मेवारीमा रहेका उनलाई प्राधिकरण अध्यक्षको बलियो दावेदार ठानिएको थियो।

निजामतीतर्फ पनि भन्सार विभाग, आन्तरिक राजश्वजस्ता आकर्षक ठाउँ र संवेदनशील पदमा एमाले भनिएकाहरू धमाधम निकालामा परिरहेका छन्। त्यसैमध्येका हुन्, भन्सार विभागका महानिर्देशक (डिजी) हरिशरण पुडासैनी। बीमा प्राधिकरणबाट फालिएका रामशरणका भाइ यिनी ओली प्रधानमन्त्री भएपछि गत साउनमा डिजी बनाइएका थिए। विद्यार्थीकालदेखि नै एमालेमा निरन्तर सक्रिय रहँदै आएका उनलाई अहिले राष्ट्रिय योजना आयोगको एउटा कोठामा लगेर थान्को लगाइएको छ। त्यस्तै, अर्का खाँटी एमाले दीर्घप्रसाद मैनाली सूचना आयोगमा पुगेका छन् भने रामप्रसाद आचार्यलाई पनि मिल्काइएको छ। पुरानो झापाली एमाले गोपी मैनालीलाई आन्तरिक राजस्वको निमित्त महानिर्देशकबाट झिकेर सार्वजनिक ऋण व्यवस्थापन कार्यालयमा पुर्‍याइएको छ।

सत्तामा पुगेका बेला कार्यकर्ताभन्दा बिचौलियालाई च्याप्ने अभ्यास ओलीको हकमा नयाँ होइन। आफूलाई 'बा' भन्नेहरूको हरतरहले संरक्षण गर्न चट्टानी अडान लिने भनिएका उहाँको अघिल्लो कार्यकालमा पनि बिचौलियालाई पोस्नेगरी थुप्रै निर्णय भएका थिए। त्यसमध्ये सुशील भट्टलाई लगानी बोर्डको अध्यक्ष बनाइएको सन्दर्भ एमाले वृत्तमा बढी चर्चा हुने गर्छ। बिचौलिया दिपक भट्टका साख्खै दाइ हुन्। दाजुभाइको सेटिङमा बैंक, वित्तीय संस्था र पुँजी बजारका साथै प्रहरी, सशस्त्र, सेना र सरकारको विशेष सामान तथा सेवा खरिदमा यो गिरोह संलग्न रहेका खबर बेलाबखत बाहिरिने गरेको छ। उनै सुशीललाई ओलीले चार वर्षका लागि उक्त पदमा नियुक्त गरेकोमा गत साउनमा कार्यकाल सकिइसकेको छ।

लगानी बोर्डजस्तो महत्वपूर्ण निकायमा चार वर्ष नेतृत्व गर्दा भाइ दिपकलाई ठूला जलविद्युत आयोजनाको ठेक्का दिलाउनुबाहेक उल्लेखनीय काम नगरेका सुशील अब राष्ट्र बैंकको गभर्नर खाने दाउमा रहेको चर्चा छ। आगामी चैत २४ गते रिक्त हुने गभर्नरमा सहोदर दाजुलाई लैजाने र डिजिटल बैंकिङको लाइसेन्स हत्याउने दिपक भट्टको खेलोफड्को शुरु भैसकेको समाचार स्रोतले बताएको छ। गभर्नर महाप्रसाद अधिकारीले रोकेको सो लाइसेन्स दिलाउने नाममा अर्बौं रकम चलखेल हुने अवस्था छ।

यता, नेपाल विद्युत प्राधिकरणका कार्यकारी निर्देशक कुलमान घिसिङलाई फालेर आफ्नालाई लैजाने बिचौलियाको योजना फेरि एकपटक रोकिएको छ। डेडिकेटेड र ट्रंकलाइन विवादमा मारवाडीको पक्षमा उभिएको सरकार कुलमानलाई बर्खास्त गरेर अर्जुनकुमार कार्कीलाई कार्यकारी निर्देशक बनाउने तयारीमा थियो। सोमबारको क्याबिनेट बैठकले त्यससम्बन्धी निर्णय गर्ने भनिए पनि अन्तिम घडीमा रोकिएपछि मुख मिठ्याएर बसेका लोडसेडिङ माफियाले फेरि एकचोटि जिल खाएका छन्।

जानकार स्रोतका अनुसार प्रधानमन्त्री ओली र उर्जामन्त्री खड्का अस्तिको क्याबिनेट बैठकबाट कुलमानलाई हटाउने तयारीमा थिए। त्यसनिम्ति उर्जामन्त्रीको तर्फबाट लिखित प्रस्तावसमेत तयार पारिएको थियो। तर, सामाजिक सञ्जालमा कुलमानको लोकप्रियता र उनलाई हटाउँदा पर्नसक्ने नकारात्मक प्रभावको विश्लेषणका आधारमा सरकार हच्किएको हो।

त्यसो त, कुलमानलाई हटाउने तयारी धेरै अगाडिदेखिकै हो। सत्ता सम्हालेलगत्तै बालुवाटार बोलाएर बक्यौता नतिर्ने उद्योगीकै अगाडि कुलमानलाई हप्काएका प्रधानमन्त्री ओलीले जुनसुकै बेला हटाउनसक्ने संकेत दिनुभएको थियो। त्यसका लागि आन्तरिक तयारी पनि नभएका होइनन्। तर, सामाजिक सञ्जालमा कुलमानको लोकप्रियता आकासिएको छ भने सरकार र प्रधानमन्त्रीको चर्को विरोध छ। यस्तो बेला उनलाई हटाउँदा एकातिर थप विरोध चर्किने स्थिति, अर्कोतिर अदालतबाट 'स्टेअर्डर' लिएर फर्किने सम्भावना ! सँगसँगै उर्जा राज्यमन्त्री कान्छाराम तामाङ कुलमानलाई कारवाही गर्न नहुने पक्षमा उभिए। सोमबार क्याबिनेटमा प्रस्ताव लैजाने तयारीमा रहेका आफ्नै पार्टीका उर्जामन्त्री खड्कालाई उनले त्यस्तो कदम नचाल्न सल्लाह दिएका थिए। कुलमान र कान्छाराम दुवै रामेछापका हुन्। यसमा भेगीय र जातीय सेन्टिमेन्टले पनि काम गरेको देखिन्छ।

कुलमानको ठाउँमा लैजाने भनिएका पूर्वसचिव कार्की आफैंमा विवादित पात्र हुन्। सचिव भएका मान्छे सहसचिवमा झरेर दुईचोटि प्राधिकरणको कार्यकारी निर्देशक खाइसकेका उनीमाथि लोडसेडिङ गराएर व्यापारी पोसेको आरोप लागेको थियो। ट्रान्सफर्मर घोटाला प्रकरणमा अख्तियारको छानबिनमा तानिएका कार्कीलाई बिचौलियासँग साँठगाँठ गरेर प्राधिकरण डुबाउन भूमिका खेलेको आरोप पनि छ। श्रीमतीको शंकास्पद मृत्युको घटना पनि सल्टिएको छैन। यसरी तेहेर्‍याएर प्राधिकरणमा लैजान लागिएका कार्कीको पक्षमा विद्युत बक्यौता नतिर्ने एकजना मारवाडीले लबिङ गरिरहेको बताइन्छ। सबैतिर माफिया र बिचौलियाका मान्छेलाई सेट गरेर इमान्दारलाई पाखा पारिएकोबारे एमालेको कर्मचारी संगठनमा प्रश्न उठिरहेको छ। तर, संयुक्त सरकारको बाध्यता भन्दै नेताहरू टक्टकिने गरेका छन्। कर्मचारी संगठनमा प्रयाक्सन इन्चार्ज पार्टी महासचिव शंकर पोखरेलकी पत्नी सुजिता शाक्य छिन् भने काठमाडौंका सांसद कृष्णगोपाल श्रेष्ठकी श्रीमती बिना सहइन्चार्ज हुन्। कमिटीको नेतृत्वमा प्रेम पराजुली र मोहन पराजुली छन्। – *साहस न्यौपाने*